# आधारभूत तह (कक्षा १-३) को पाठ्यक्रम

२०७६

नेपाल सरकार
शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय
पाठ्यक्रम विकास केन्द्र
सानोठिमी, भक्तपुर

# आधारभूत तह (कक्षा १-३) को

# पाठ्यक्रम

२०७६

नेपाल सरकार
शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय
**पाठ्यक्रम विकास केन्द्र**
सानोठिमी, भक्तपुर

## प्राक्कथन

विद्यालय तहको शिक्षालाई बढी उद्देश्यमूलक, व्यावहारिक, समसामयिक एवम् सान्दर्भिक बनाउने अभिप्रायले पाठ्यक्रम परिमार्जनको कार्य प्रारम्भ गरिएको हो । यसै सन्दर्भमा शिक्षक, अभिभावक, विद्यार्थी तथा विज्ञहरूबाट प्राप्त राय सुझाव; ज्ञान, विज्ञान तथा प्रविधिमा भएको विकास तथा परिर्वतन र स्थानीय आवश्यकता तथा विश्वव्यापी सन्दर्भबिच सन्तुलनको आवश्यकतालाई समेत दृष्टिगत गरी विद्यालय तह कक्षा १-३ का लागि २०४९ मा विकास गरी लागू गरिएको पाठ्यक्रममा समसामयिक परिमार्जनसहित कार्यान्वयन भरहेको प्राथमिक शिक्षा पाठ्यक्रम २०६२ लाई परिमार्जनको गर्नु आवश्यक देखिएकाले आधारभूत तहअन्तर्गत कक्षा १-३ को यो पाठ्यक्रम विकास गरिएको हो । सङ्घीय लोकतान्त्रिक गणतन्त्र नेपालका लागि विद्यालय शिक्षाको पाठ्यक्रमका विकासका लागि राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ ले निर्दिष्ट गरेका सिद्धान्त तथा स्वरूपमा आधारित भई उल्लिखित सन्दर्भहरूलाई समेत आधार मानी विद्यालय शिक्षाको पाठ्यक्रम विकास गर्ने क्रममा आधारभूत तह कक्षा १-३ को पाठ्यक्रम २०७६ विकास गरिएको छ । विश्वमा भएका नवीनतम शैक्षिक परिवर्तन एवम् नेपालको वर्तमान सन्दर्भ र स्थानीय आवश्यकतालाई दृष्टिगत गरी बालबालिकाको सर्वाङ्गीण विकासमा सहयोग पुऱ्याउने, सामाजिक न्याय प्रवर्धन गर्ने र राष्ट्र निर्माणका लागि सक्षम तथा प्रतिस्पर्धी नागरिक विकास गर्ने लक्ष्यसहित राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ ले तयार गरेको विद्यालय शिक्षाको मार्गचित्रमा आधारित भई यो पाठ्यक्रम विकास गरिएको छ ।

पाठ्यक्रममा समावेश गरिएका विभिन्न विषयलाई अन्तरसम्बन्धित गरी जीवनसापेक्ष बनाउने गरी सिकाइ सहजीकरण प्रक्रिया सञ्चालन गर्ने उद्देश्यले यो पाठ्यक्रम एकीकृत ढाँचामा विकास गरिएको छ । अन्तर्राष्ट्रिय अभ्यास र नेपालको अनुभव, नेपालको शिक्षण सिकाइको अभ्यास, शिक्षक उपलब्धता र तयारी, पेसागत विकासलगायतका सन्दर्भको विश्लेषण गरी सामाजिक अध्ययन, विज्ञान तथा वातावरण, स्वास्थ्य तथा शारीरिक शिक्षा र सिर्जनात्मक कला विषयलाई अन्तरविषयक ढाँचाको पाठ्यक्रमका रूपमा हाम्रो सेरोफेरो विषयक्षेत्रमा एकीकरण गरिएको छ भने पाठ्यक्रमको समग्र संरचनामा हाम्रो सेरोफेरो, गणित, नेपाली भाषा, अङ्ग्रेजी भाषा विषयक्षेत्र समावेश गरी बहुविषयक ढाँचाको एकीकृत पाठ्यक्रम तयार गरिएको छ । त्यसै गरी कक्षा १-३ का विद्यार्थीका लागि आवश्यक हुने व्यवहारकुशल सिपहरूलाई आवश्यकतानुसार सबै विषयक्षेत्र र कक्षामा एकीकृत गरिएको छ । कक्षा १-३ मा समावेश गरिएको मातृभाषा/स्थानीय विषयको पाठ्यक्रम छनोट तथा विकास गरी कार्यान्वयन गर्ने दायित्व सम्बन्धित स्थानीय तहको हुने छ ।

शिक्षक, विशेषज्ञ तथा विज्ञहरूको सहभागितामा सञ्चालन गरिएका विभिन्न कार्यशालाका माध्यमबाट विकास गरिएको मस्यौदामा विभिन्न विषय समितिहरूबाट प्राप्त सुझावहरूलाई समेत आधार मानी परीक्षणका लागि वि. सं. २०७५ मा तयार गरिएको कक्षा १-३ को एकीकृत ढाँचाको यो पाठ्यक्रम शैक्षिक वर्ष २०७६ मा कक्षा १ मा परीक्षण गरी सो परीक्षणबाट प्राप्त पृष्ठपोषणसमेत लाई आधार मानेर परिमार्जित स्वरूपमा तयार गरी नेपालका सम्बन्धित सबै विद्यालयमा शैक्षिक वर्ष २०७७ देखि कक्षा १ बाट कार्यान्वयन प्रारम्भ हुने गरी राष्ट्रिय पाठ्यक्रम विकास तथा मूल्याङ्कन परिषद्बाट स्वीकृत भएको हो । यसमा पाठ्यक्रम परिमार्जनको सन्दर्भ तथा औचित्य, पाठ्यक्रम विकास तथा परिमार्जन प्रक्रिया, पाठ्यक्रम विकासमा अवलम्बन गरिएका सिद्धान्तहरू र एकीकृत ढाँचाको पाठ्यक्रम निर्माण प्रक्रिया उल्लेख गरिएको छ । त्यसै गरी यस पाठ्यक्रममा शिक्षाका राष्ट्रिय उद्देश्य, विद्यालय शिक्षाको तहगत संरचना, विद्यालय शिक्षाको पाठ्यक्रम संरचना, आधारभूत शिक्षाका तहगत सक्षमता (कक्षा १-३), आधारभूत तह (कक्षा १-३) को विषयगत पाठ्यक्रम, एकीकृत पाठ्यक्रममा समावेश गरिने व्यवहारकुशल सिपहरू र एकीकृत पाठ्यक्रमको समग्र संरचना समावेश गरिएको छ । यसमा सिकाइ सहजीकरण विधि तथा प्रक्रिया, विद्यार्थी मूल्याङ्कन, माध्यम भाषाको छनोट, पाठ्यक्रम कार्यान्वयन योजना र पाठ्यक्रम मूल्याङ्कन, परिमार्जन तथा सुधारको प्रक्रियासमेत समावेश गरिएको छ ।

यो पाठ्यक्रम तयार गर्ने क्रममा महत्त्वपूर्ण सहयोग पुऱ्याउनु हुने नीति निर्माता, विज्ञ तथा विशेषज्ञ, शिक्षाविद्, प्राध्यापक, शिक्षक, विद्यार्थी एवम् सम्बन्धित सरोकारवालाहरूप्रति पाठ्यक्रम विकास केन्द्र हार्दिक कृतज्ञता व्यक्त गर्दछ । यो पाठ्यक्रमको कार्यान्वयनलाई प्रभावकारी बनाई बालबालिकालाई गुणस्तरीय शिक्षाको अवसर सुनिश्चित गर्ने कार्यमा सम्बद्ध सबैबाट सक्रिय योगदानको अपेक्षा गरिएको छ । विद्यालय शिक्षाको यो पाठ्यक्रम गतिशील दस्तावेज भएकाले यसमा सुधार तथा परिमार्जन गर्दै अझ प्रभावकारी बनाउनका लागि यो केन्द्रले पाठ्यक्रम प्रयोगकर्तालगायत सम्बन्धित सबैबाट निरन्तर रचनात्मक सुझाव प्राप्त हुने अपेक्षा गरेको छ ।

वि.सं. २०७६, माघ

**पाठ्यक्रम विकास केन्द्र**

# विषय सूची

## १. परिचय

राष्ट्रको शिक्षा नीति तथा राष्ट्रिय पाठ्यक्रम प्रारूपले मार्गनिर्देश गरेको शिक्षाको लक्ष्य तथा प्रक्रियाअनुरूप शिक्षा पद्धति सञ्चालनको मूल आधारका रूपमा पाठ्यक्रम रहेको हुन्छ । विद्यालय शिक्षाको पाठ्यक्रमले निश्चित कक्षा वा तहको अध्ययन पूरा गरेपछि विद्यार्थीहरूले हासिल गर्ने सक्षमता र ती सक्षमता हासिल गर्नका लागि विषयगत रूपमा प्राप्त गर्नुपर्ने सिकाइ उपलब्धि निर्धारण गर्दछ । पाठ्यक्रमले अपेक्षित सिकाइ उपलब्धि प्राप्तिका लागि सिकाइ विधि तथा प्रक्रियाको प्रयोग र विद्यार्थीमा अपेक्षित सिकाइ उपलब्धिहरू प्राप्तिको सुनिश्चिततालाई मार्गदर्शन गर्दछ । यही अवधारणाअनुसार यस पाठ्यक्रममा सिकारुले हासिल गर्नुपर्ने सक्षमता तथा सिकाइ उपलब्धि र ती सक्षमता तथा सिकाइ उपलब्धि प्राप्तिका लागि आवश्यक विषयवस्तुलगायत सिकाइ सहजीकरण प्रक्रिया र विद्यार्थी मूल्याङ्कनका लागि आवश्यक निर्देशनसहितको सिकाइ योजनाका रूपमा बालबालिकाको सिकाइलाई मार्गदर्शन गर्ने आवश्यक पर्ने तत्वहरू समावेश गरिएको छ । यस पाठ्यक्रममा विद्यार्थीका पूर्व सिकाइ अनुभव, उसको परिवेश तथा पृष्ठभूमि, रुचि र क्षमतासहित वर्तमानको आवश्यकता आकलन गरी उनीहरूले हासिल गर्नुपर्ने ज्ञान, सिप, अभिवृत्तिसहितका सक्षमताहरू समेटिएको छ । यसमा पाठ्यक्रम कार्यान्वयन योजना तथा पाठ्यक्रम कार्यान्वयनको मूल्याङ्कन गरी समसामयिक सुधार तथा परिमार्जनका लागि मार्गनिर्देश गरिएको छ ।

आधारभूत तहअन्तर्गत कक्षा १-३ का लागि विकास गरिएको पाठ्यक्रम राष्ट्रिय पाठ्यक्रम विकास तथा मूल्याङ्कन परिषद्ले परीक्षणका लागि स्वीकृत गरेअनुसार शैक्षिक वर्ष २०७६ मा कक्षा एकमा परीक्षण गरिएको थियो । राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ ले निर्दिष्ट गरेका सिद्धान्त तथा आधारलाई विचार गरी परीक्षणबाट प्राप्त भएका पृष्ठपोषणसमेतका आधारमा आवश्यक सुधारसहित तयार गरिएको एकीकृत ढाँचाको यो पाठ्यक्रम शैक्षिक वर्ष २०७७ बाट नेपालका सम्बन्धित सबै विद्यालयहरूमा कार्यान्वयन गर्ने गरी राष्ट्रिय पाठ्यक्रम विकास तथा मूल्याङ्कन परिषद्ले मिति २०७६ माघ २ मा स्वीकृत गरेको हो । आधारभूत तह (कक्षा १-३) को पाठ्यक्रम, २०७६ को यस दस्तावेजमा पाठ्यक्रम परिमार्जनको सन्दर्भ तथा औचित्य, पाठ्यक्रम विकास तथा परिमार्जन प्रक्रिया, पाठ्यक्रम विकासमा अवलम्बन गरिएका सिद्धान्तहरू तथा एकीकृत ढाँचाको पाठ्यक्रम निर्माण प्रक्रिया उल्लेख गरिएको छ । त्यसै गरी यस पाठ्यक्रममा शिक्षाका राष्ट्रिय उद्देश्य, विद्यालय शिक्षाको तहगत संरचना, विद्यालय शिक्षाको पाठ्यक्रम संरचना, आधारभूत शिक्षाका तहगत सक्षमता (कक्षा १-३), आधारभूत तह (कक्षा १-३) का विषयगत पाठ्यक्रम, एकीकृत पाठ्यक्रममा समावेश गरिने व्यवहारकुशल सिपहरू र एकीकृत पाठ्यक्रमको समग्र संरचना समावेश गरिएको छ । यसमा सिकाइ सहजीकरण विधि तथा प्रक्रिया, विद्यार्थी मूल्याङ्कन, माध्यम भाषाको छनोट, पाठ्यक्रम कार्यान्वयन योजना तथा पाठ्यक्रम मूल्याङ्कन, परिमार्जन र सुधारको प्रक्रिया पनि समावेश गरिएको छ ।

## २. पाठ्यक्रम परिमार्जनको सन्दर्भ र औचित्य

पाठ्यक्रमको विकास, परिमार्जन तथा अद्यावधिक गर्ने कार्य निरन्तर चलिरहने प्रक्रिया हो । अध्ययन अनुसन्धानका नतिजाहरू, विद्यार्थी, शिक्षक तथा अभिभावकहरू, विभिन्न सङ्घसंस्था र पेसासँग आबद्ध सङ्घ सङ्गठन, राजनीतिकर्मी, सूचना तथा सञ्चार माध्यम र नागरिक समाजबाट पाठ्यक्रमलाई सान्दर्भिक बनाउन सकारात्मक सल्लाह तथा सुझाव प्राप्त हुँदै आएका छन् । त्यसै गरी ज्ञानको विस्तार तथा सिर्जना, प्रविधिमा आएको परिवर्तन, राजनीतिक, सामाजिक तथा आर्थिक क्षेत्रमा आएको परिवर्तन, विद्यार्थीहरूमा विकसित हुनुपर्ने सिपहरूलगायत आजको प्रतिस्पर्धात्मक विश्वको आवश्यकतालाई विचार गरेर पाठ्यक्रममा समयानुकूल परिमार्जन गर्नु आवश्यक छ । यही आवश्यकतालाई दृष्टिगत गरी विद्यालय तहका लागि राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ तयार भएको छ । राष्ट्रिय पाठ्यक्रम प्रारूपले सिकाइलाई जीवनोपयोगी र समयसापेक्ष बनाउन पाठ्यक्रम परिमार्जनको आवश्यकता औँल्याएको सन्दर्भमा आधारभूत तहअन्तर्गत कक्षा १-३ का लागि यो पाठ्यक्रम तयार गरिएको छ । नेपालमा विद्यालय तहको पाठ्यक्रम परिमार्जन यसरूपमा गर्नुका औचित्य निम्नअनुसार छन् :

(क) लामो समयदेखि सामान्य अद्यावधिक गर्नेबाहेक पाठ्यक्रमका सिद्धान्त, मान्यता, स्वरूपलगायत शिक्षाका उद्देश्यसमेतलाई पुनरवलोकन गरी पाठ्यक्रम परिमार्जन नभएको सन्दर्भमा सामयिक विषयवस्तु समावेश गर्न

(ख) नेपालको लोकतान्त्रिक सङ्घीय गणतन्त्रले लक्षित गरेको विकास, समता, स्वतन्त्रता र स्वाभिमानको अभिवृद्धिमा सहयोग पुऱ्याई जिम्मेवार र सदाचारी नागरिक तयार गर्न

(ग) ज्ञान, विज्ञान तथा प्रविधिमा भएको विकास र विस्तारले सिर्जना गरेका अवसर तथा चुनौतीहरूसापेक्ष विश्वव्यापीकरणको माग र स्थानीय सन्दर्भको सन्तुलनसहित स्थानीय आवश्यकताको सम्बोधन गर्न

(घ) व्यवहारकुशल सिपहरूलाई सिकाइ प्रक्रियामा एकीकृत गरी पाठ्यक्रममा ती सिपहरूसँग सम्बन्धित सक्षमताहरू उल्लेख गरी सिकाइलाई जीवनसापेक्ष बनाउन

(ङ) विभिन्न विषयको सिकाइलाई अन्तरसम्बन्धित गरी सिकाइलाई बढी सान्दर्भिक र रुचिकर बनाउनका लागि एकीकृत संरचनाको पाठ्यक्रम कार्यान्वयन गर्न

(च) सिकाइका नवीनतम सिद्धान्त, विधि तथा प्रक्रियाहरू प्रयोग गरी सिकाइलाई बालकेन्द्रित बनाई बालबालिकाको रचनात्मक क्षमता विकास गर्न

(छ) विद्यार्थी मूल्याङ्कनलाई सिकाइ सहजीकरण प्रक्रियाको अभिन्न अङ्गका रूपमा विकास गरी प्रत्येक विद्यार्थीको न्यूनतम सिकाइ सुनिश्चित हुने गरी सिकाइस्तर वृद्धिका लागि सहयोग पुऱ्याउन

## ३. पाठ्यक्रम विकास तथा परिमार्जन प्रक्रिया

विभिन्न अध्ययन अनुसन्धानहरूका सम्बद्ध सुझाव, ज्ञान, विज्ञान तथा प्रविधिमा भएको विकास तथा परिर्वतन र समाजको आवश्यकता तथा अपेक्षाको विश्लेषणसमेतका आधारमा यस पाठ्यक्रमको विकास प्रारम्भ गरिएको थियो । यस क्रममा राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ ले निर्दिष्ट गरेका मान्यता तथा सिद्धान्तहरूलाई आत्मसात गरिएको छ । आधारभूत तह (कक्षा १-३) को यो पाठ्यक्रम विकासमा निम्नलिखित प्रक्रिया अवलम्बन गरिएको थियो :

(क) राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ ले विद्यालय तहको पाठ्यक्रम परिमार्जनको आवश्यकता देखाएको सन्दर्भमा उक्त प्रारूपले प्रस्तुत गरेको पाठ्यक्रमको संरचना तथा आधारभूत सिद्धान्तमा आधारित भई पाठ्यक्रम विकास गरिएको छ ।

(ख) पाठ्यक्रम विकास केन्द्रका सम्बन्धित विषय समिति तथा विषयगत शाखाहरूले प्राप्त सुझाव तथा आफ्नो अध्ययन तथा अनुभवमा आधारित भई पाठ्यक्रम सुधारका लागि पहिचान गरेका पक्ष तथा क्षेत्रहरूलाई समेत आधार मानिएको थियो ।

(ग) स्थलगत अध्ययन, शिक्षक, विद्यार्थी, अभिभावक तथा अन्य सरोकारवालाहरूबाट प्राप्त र अन्य विभिन्न माध्यमबाट पाठ्यक्रम विकास केन्द्रलाई प्राप्त भएका रायसुझावलाई समेत विश्लेषण गरिएको थियो ।

(घ) सम्बन्धित विषय समिति, शिक्षक तथा विशेषज्ञहरूको संलग्नतामा विभिन्न विषयक्षेत्रमा विद्यार्थीले हासिल गर्नुपर्ने तहगत सक्षमता तथा विषयगत सिकाइका क्षेत्र र सिकाइ उपलब्धिको प्रारम्भिक मस्यौदा तयार गरिएको थियो ।

(ङ) तहगत सक्षमता तथा विषयगत सिकाइका क्षेत्र र सिकाइ उपलब्धिको प्रारम्भिक मस्यौदालाई शिक्षक, विषय विज्ञ तथा विभिन्न विज्ञहरू सम्मिलित कार्यशालामा प्रस्तुत गरी नेपाल तथा केही अन्य मुलुकको अभ्यासको समीक्षा र समाजका अपेक्षा तथा विद्यार्थीका आवश्यकताहरूको विश्लेषणसमेतका आधारमा तहगत सक्षमता र विषयगत सिकाइ उपलब्धिमा आवश्यक परिमार्जनसहित तहगत सक्षमता तथा विषयगत सिकाइका क्षेत्र र सिकाइ उपलब्धिको परिमार्जित मस्यौदा तयार गरिएको थियो ।

(च) पाठ्यक्रम विकास केन्द्रले एकीकृत पाठ्यक्रमको अवधारण तथा स्वरूपका सम्बन्धमा सम्बद्ध विज्ञहरूबिच विभिन्न गोष्ठी, बैठक तथा कार्यशालाका माध्यमबाट छलफल प्रारम्भ गर्नुका साथै कक्षा १-३ को तहगत सक्षमता तथा विषयगत सिकाइका क्षेत्र र सिकाइ उपलब्धिको मस्यौदासहित शिक्षक, विषयविज्ञहरू तथा पाठ्यक्रम विज्ञहरू सम्मिलित कार्यशालामा एकीकृत पाठ्यक्रमको विकास प्रक्रियाका सम्बन्धमा छलफल गर्नुका साथै एकीकृत पाठ्यक्रमको अवधारणा तथा स्वरूपका बारेमा स्पष्टता कायम गरी राष्ट्रियस्तरमा क्षमता अभिवृद्धि गरिएको थियो ।

(छ) पाठ्यक्रम विकास केन्द्रले कक्षा १-३ को पाठ्यक्रमको विकास तथा पाठ्यक्रम एकीकरण सम्बन्धमा भएका यसअघिका प्रारम्भिक कार्यको समीक्षासहित सम्बन्धित विज्ञसँगको छलफल, एकीकृत पाठ्यक्रमसँग सम्बन्धित सिद्धान्त, स्वरूप तथा अन्तर्राष्ट्रिय अभ्यासको अध्ययनसमेत गरेर एकीकृत पाठ्यक्रम निर्माणको मार्गचित्र तथा कार्ययोजनाको मस्यौदा तयार गरी विभिन्न विज्ञहरू, शिक्षक तथा अन्य सरोकारवालाहरूबिच छलफल तथा अन्तरक्रिया गरेको थियो । छलफल तथा अन्तरक्रियाबाट मार्गचित्र तथा कार्ययोजनाको मस्यौदामा परिमार्जन गरी सो अवधारणा तथा मार्गचित्रलाई अन्तिम रूप प्रदान गरी सोही आधारमा पाठ्यक्रम मस्यौदा तयार गरिएको थियो ।

(ज) शिक्षक, विषयविज्ञ तथा विशेषज्ञहरूको कार्यशालाले विषयगत सक्षमता, सिकाइ उपलब्धि तथा विषयवस्तुको मस्यौदा तयार गरेको थियो ।

(झ) मस्यौदा गरिएका विषयगत सक्षमता, सिकाइका क्षेत्र, सिकाइ उपलब्धि तथा विषयवस्तुका आधारमा एकीकृत पाठ्यक्रमको निर्धारित ढाँचाअनुसार सर्वप्रथम सामाजिक अध्ययन, विज्ञान तथा वातावरण, सिर्जनात्मक कला र स्वास्थ्य तथा शारीरिक शिक्षालाई हाम्रो सेरोफेरो विषयक्षेत्रका रूपमा विभिन्न अन्तरविषयक विषयक्षेत्रमा एकीकृत गरिएको पाठ्यक्रम मस्यौदा तयार गरियो । त्यसै गरी हाम्रो सेरोफेरोमा निर्धारण गरिएका विषयक्षेत्रहरूमा समावेश हुने गरी गणित, नेपाली र अङ्ग्रेजी विषयका केही बहुविषयक विषयक्षेत्रहरू निर्धारण गरियो भने यी विषयक्षेत्रहरूभन्दा बाहिर राख्न उपयुक्त हुने सिकाइ उपलब्धिलाई सम्बन्धित अलग्गै विषयक्षेत्र वा क्षेत्रमा समावेश गरिएको थियो ।

(ञ) एकीकृत पाठ्यक्रम विकासको मार्गचित्रअनुसारको ढाँचामा पाठ्यक्रमको मस्यौदा तयार गर्न शिक्षक, विषय विशेषज्ञ तथा पाठ्यक्रम विज्ञहरूको सहभागितामा कार्यशाला आयोजना गरी सिकाइ उपलब्धि तथा विषयवस्तु र अन्तरविषयक, बहुविषयक तथा विषयगत विषयक्षेत्रहरूलाई पुनरवलोकन गरी अन्तिम रूप दिनुका साथै एकीकृत ढाँचाको पाठ्यक्रमका मुख्य अङ्गहरूको मस्यौदा तयार गरिएको थियो । सो मस्यौदालाई आवश्यक सम्पादन तथा परिमार्जन गरी विज्ञहरूको समूहले परिमार्जित मस्यौदा तयार गरेको थियो ।

(ट) पाठ्यक्रमको विषयगत मस्यौदा तथा एकीकृत स्वरूपलाई शिक्षक कार्यशालाबाट प्राप्त सुझावलाई समेत समावेश गरी विषय समितिहरूका छुट्टाछुट्टै तथा संयुक्त बैठकबाट अन्तिम रूप दिइएको थियो ।

(ठ) विषय समितिले सिफारिस गरेको पाठ्यक्रमको मस्यौदालाई क्षेत्र र क्रमलगायतका पक्षहरू पुनरवलोकन गरी समन्वय तथा सम्पादन समितिले स्वीकृतिका लागि राष्ट्रिय पाठ्यक्रम विकास तथा मूल्याङ्कन परिषद्मा पेस गर्न गरेको सिफारिसका आधारमा पाठ्यक्रम विकास केन्द्रले स्वीकृतिका लागि राष्ट्रिय पाठ्यक्रम विकास तथा मूल्याङ्कन परिषद्मा पेस गरेको थियो ।

(ड) यो पाठ्यक्रम राष्ट्रिय पाठ्यक्रम विकास तथा मूल्याङ्कन परिषद्को मिति २०७५/१२/२२ को निर्णयअनुसार परीक्षणका लागि स्वीकृत भई शैक्षिक सत्र २०७६ मा कक्षा १ मा परीक्षण गरिएको थियो ।

(ढ) राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ का सिद्धान्त तथा आधारलाई विचार गरेर परीक्षणका क्रममा प्राप्त पृष्ठपोषणसमेतका आधारमा शिक्षक तथा विज्ञहरूको कार्यशाला आयोजना गरी परीक्षणका लागि तयार गरिएको पाठ्यक्रममा आवश्यक परिमार्जन गरी परिमार्जित मस्यौदा तयार गरिएको थियो ।

(ञ) परिमार्जित मस्यौदालाई विषय समितिले आवश्यक सम्पादनसहित स्वीकृतिका लागि सिफारिस गरेअनुसार समन्वय तथा सम्पादन समितिको पुनरवलोकनपश्चात् पाठ्यक्रम विकास केन्द्रले स्वीकृतिका लागि राष्ट्रिय पाठ्यक्रम विकास तथा मूल्याङ्कन परिषद्मा पेस गरेकामा परिषद्ले २०७६ माघ २ मा स्वीकृत गरेअनुसार यो पाठ्यक्रम शैक्षिक वर्ष २०७७ बाट नेपालका सबै विद्यालयमा कार्यान्वयन हुने छ ।

## ४. पाठ्यक्रम विकासमा अवलम्बन गरिएका सिद्धान्तहरू

सर्वाङ्गीण बालविकासको अवधारणालाई विचार गरी बालकेन्द्रित सिकाइ सिद्धान्तमा आधारित भई विकास गरिएको यो पाठ्यक्रमले मूलतः राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ मा उल्लेख गरिएका सिद्धान्तहरूलाई नै पाठ्यक्रम विकासका सिद्धान्तका रूपमा लिएको छ । अन्तरविषयक तथा बहुविषयक विषयक्षेत्रमा आधारित भई एकीकृत सिद्धान्तअनुसार पाठ्यक्रमको संरचना तयार गरिएको छ भने जीवनोपयोगी तथा व्यवहारकुशल सिपहरूसमेत एकीकृत गरिएको छ । यो पाठ्यक्रम विकास गर्दा नेपालका सामाजिक, सांस्कृतिक तथा भाषिकलगायतका विविधतालाई समावेश गरिनुका साथै स्थानीय आवश्यकतामा आधारित ढाँचा अवलम्बन गरिएको छ । यस पाठ्यक्रममा नेपाली मूल्य र मान्यता तथा पूर्वीय ज्ञानको प्रतिनिधित्वका साथै विद्यार्थीको सहभागिता, कार्य तथा खोजलाई जोड दिइएको छ । पाठ्यक्रमलाई सक्षमतामा आधारित बनाउन कक्षा १-३ का तहगत तथा विषयगत सक्षमताहरू पहिचान गरिएको छ ।

## ५. एकीकृत ढाँचाको पाठ्यक्रम विकास

अलग अलग विषयहरू आआफ्नै तरिकाले शिक्षण गर्ने गरी निर्माण गरिएको विषयगत पाठ्यक्रमले विभिन्न विषयलाई अन्तरसम्बन्धित गर्ने र सिकाइलाई दैनिक जीवनसापेक्ष बनाई सान्दर्भिक बनाउने कार्यमा अपेक्षित योगदान गर्न नसकेको महसुस गरी पाठ्यक्रमको वैकल्पिक ढाँचाको खोजीकै क्रममा विज्ञ तथा अनुसन्धानकर्ताहरूले एकीकृत पाठ्यक्रमका विभिन्न ढाँचाहरू सिफारिस गरेका छन् । कतिपय विषयक्षेत्रमा माथिल्लो तहमा पनि एकीकृत पाठ्यक्रमको प्रयोग भए पनि विद्यालय तहका प्रारम्भिक चरणहरूमा भने एकीकृत ढाँचाको पाठ्यक्रमको प्रयोगमा व्यापकता आएको छ । एकीकृत पाठ्यक्रम विभिन्न स्वरूपका हुने भए पनि समग्रमा एकीकृत पाठ्यक्रमले विभिन्न विषयलाई अन्तरसम्बन्धित गरेर जीवनसापेक्ष हुने गरी सिकाइ सञ्चालन गर्ने भन्ने बुझाउँछ । विभिन्न विषयका ज्ञान र सिपलाई कुनै समस्यामा वा विषयक्षेत्रमा केन्द्रित गर्नेदेखि लिएर कुनै मुद्दा वा समस्यामा केन्द्रित भई विषयवस्तुको कुनै सीमा निर्धारण नगरी समस्या समाधानका लागि आवश्यक ज्ञान तथा सिप प्राप्त हुने गरी शिक्षण सिकाइ सञ्चालन गर्ने एकीकृत पाठ्यक्रमका ढाँचाहरू रहेका छन् । पाठ्यक्रमले अपेक्षा गरेअनुसारको सिकाइ उपलब्धि (ज्ञान र सिप) लाई वास्तविक जीवनमा रूपान्तरण गर्नका लागि एकीकृत ढाँचाको पाठ्यक्रम र तदनुकूलको शिक्षण सिकाइ सहयोगी हुन्छ । नेपालमा एकीकृत पाठ्यक्रम सम्बन्धमा विगतमा केही अभ्यास भएका पनि छन् । नेपालका यससम्बन्धी अभ्यासहरू निम्नअनुसार रहेका छन् :

(क) पाठ्यक्रम एकीकृत नभएको तर अन्तरविषयगत समायोजन गरी निम्नमाध्यमिक तहको नेपाली र सामाजिक विषयमा वि.सं. २०४२/०४३ र कक्षा १-३ को मेरो सेरोफेरो विषयका रूपमा वि.सं. २०५० मा पाठ्यपुस्तक विकास तथा कार्यान्वयन गरिएको थियो तर यो पाठ्यपुस्तक केही वर्ष प्रयोग गरिए पनि यसलाई निरन्तरता दिइएन ।

(ख) केही विषय र कक्षामा अन्तरविषयगत विषयक्षेत्र एकीकरण गरिए पनि सिकाइ सामग्री विकास गर्दा एकीकृत सिद्धान्त अवलम्बन नभई विषयक्षेत्रगत पाठ्यसामग्री अलग अलग रूपमा राखिएको छ । जस्तै : सामाजिक अध्ययन र जनसङ्ख्या शिक्षा, स्वास्थ्य, जनसङ्ख्या तथा वातावरण शिक्षा, स्वास्थ्य र शारीरिक शिक्षा, विज्ञान र वातावरण शिक्षा, पेसा, व्यवसाय र प्रविधि शिक्षा ।

(ग) पाठ्यसामग्रीमा समावेश भएका सिकाइ क्रियाकलापहरू एकीकृत नगरी भिन्नभिन्न सिकाइ उपलब्धिसँग आबद्ध गरिएको छ ।

(ङ) सिकारुको सक्रियता, सिकारु निर्दिष्ट सिकाइ क्रियाकलाप सञ्चालन र अन्तरविषयगत तथा बहुविषयगत सिकाइको मूल्याङ्कन गर्ने उद्देश्यका साथ पाठ्यसामग्री विकास तथा मूल्याङ्कन कार्य यसअघि प्राथमिकताका साथ बढेको देखिँदैन ।

विभिन्न देशहरूले एकीकृत पाठ्यक्रम विकास गर्दा देशको परिस्थिति, प्राविधिक दक्षता, प्रविधिको उपलब्धता, जनशक्तिको पेसागत तथा प्राविधिक दक्षता, सामाजिक तथा सांस्कृतिक परिवेशलाई आधार मानेका देखिन्छन् । विश्वका विभिन्न देशका अभ्यासहरूको पुनरवलोकन गर्दा समान प्रकृतिको पाठ्यक्रम विकास ढाँचा प्रयोग भएको देखिँदैन । अधिकांश देशमा विषयगत पहिचानले मुख्य स्थान पाए पनि एकीकृत पाठ्यक्रम विकास तथा प्रयोगको क्रममा वृद्धि भइरहेको छ । यस्तो एकीकृत पाठ्यक्रमको विकास र प्रयोगका सन्दर्भमा विभिन्न किसिमका मिश्रित नमुनाहरू उपयोगमा ल्याइएका देखिन्छन् ।

आधारभूत तहअन्तर्गत कक्षा १-३ को पाठ्यक्रमलाई एकीकृत स्वरूपमा व्यवस्थित गर्ने सन्दर्भमा राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ ले पनि दिशानिर्देश गरेको र एकीकृत शिक्षण सिकाइले सिकाइलाई बढी सान्दर्भिक बनाउन सहयोग पुर्‍याउने भएकाले यस पाठ्यक्रमलाई एकीकृत ढाँचामा विकास गरिएको छ । अन्तर्राष्ट्रिय अभ्यास र नेपालको अनुभव, नेपालको शिक्षण सिकाइको अभ्यास, शिक्षक आपूर्ति र तयारी, पेसागत विकासलगायतका सन्दर्भको विश्लेषण गरी सामाजिक अध्ययन, विज्ञान तथा वातावरण, स्वास्थ्य तथा शारीरिक शिक्षा र सिर्जनात्मक कला विषयलाई अन्तरविषयक (Interdisciplinary) ढाँचाको पाठ्क्रमका रूपमा हाम्रो सेरोफेरो विषयक्षेत्रमा समावेश गरिएको छ भने पाठ्यक्रमको समग्र संरचनामा हाम्रो सेरोफेरो, गणित, नेपाली भाषा, अङ्ग्रेजी भाषा विषयक्षेत्रलाई समावेश गरी बहुविषयक (Multidisciplinary) ढाँचाको एकीकृत पाठ्यक्रम तयार गरिएको छ । त्यसै गरी कक्षा १-३ का विद्यार्थीका लागि आवश्यक हुने व्यवहारकुशल सिपहरू (Soft skills) लाई आवश्यकतानुसार सबै विषयक्षेत्र र कक्षामा एकीकृत गरिएको छ ।

एकीकृत पाठ्यक्रमको विकाससँगसँगै आवश्यक पाठ्यसामग्री विकास र तिनको सहज पहुँच, शिक्षक तयारी, कक्षा शिक्षणको अभ्यास, सिकारुको सक्रिय सहभागिता, अभिभावकको संलग्नता तथा मूल्याङ्कन प्रक्रियामा सुधार र विद्यालयमा आधारित पेसागत सहयोग पद्धतिलाई समेत व्यवस्थित हुने गरी यो एकीकृत पाठ्यक्रम कार्यान्वयन गरिनु आवश्यक हुन्छ ।

## ६. विद्यालय शिक्षाको राष्ट्रिय उद्देश्य

राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ अनुसार विद्यालय शिक्षाका राष्ट्रिय उद्देश्यहरू निम्नानुसार हुने छन् :

(क) प्रत्येक व्यक्तिमा अन्तर्निहित प्रतिभा प्रस्फुटन गरी व्यक्तित्व विकास गर्ने

(ख) सङ्घीय लोकतान्त्रिक गणतन्त्रका मूल्य तथा मान्यताप्रति प्रतिबद्ध, राष्ट्र र राष्ट्रियताप्रति बफादार, स्वाभिमानी, सामाजिक तथा सांस्कृतिक विविधतालाई सम्मान गर्ने, चरित्रवान्, नैतिकवान् एवम् जिम्मेवार नागरिक तयार गर्ने

(ग) श्रमप्रति सम्मान एवम् सकारात्मक सोच भएका, रोजगार तथा स्वरोजगारउन्मुख, उत्पादनशील, उद्यमशील र सिपयुक्त नागरिक तयार गर्ने

(घ) व्यक्तिको सामाजिकीकरणमा सहयोग गर्दै सामाजिक सद्भाव तथा सहिष्णुता र राष्ट्रिय एकता सुदृढ गर्न सहयोग पुऱ्याउने

(ङ) प्राकृतिक तथा राष्ट्रिय सम्पदा र पर्यावरणको संरक्षण, संवर्धन र सदुपयोग गर्दै दिगो विकासमा योगदान गर्ने सचेत नागरिक तयार गर्ने

(च) प्रत्येक व्यक्तिमा शान्ति, मानव अधिकार, समानता, समावेशिता र सामाजिक न्यायका मान्यताअनुरूपको आचरण विकास गरी समतामूलक, समावेशी, न्यायपूर्ण र समाजवादउन्मुख राष्ट्र निर्माणमा मद्दत गर्ने

(छ) राष्ट्रिय तथा अन्तर्राष्ट्रिय स्तरमा प्रतिस्पर्धी, आधुनिक सूचना तथा सञ्चार प्रविधि प्रयोग गर्न सक्ने विश्वपरिवेश सुहाउँदो दक्ष जनशक्ति तयार गर्ने

(ज) वैज्ञानिक अवधारणा, तथ्य, सिप, सिद्धान्त तथा प्रविधिको प्रयोग गर्न सक्ने वैज्ञानिक सुझबुझ भएका र खोज तथा अनुसन्धानमुखी जनशक्ति तयार गर्ने

(झ) रचनात्मक तथा समालोचनात्मक चिन्तन गर्ने, जीवनोपयोगी सिप भएका, सहिष्णु र भाषिक सक्षमतामा निपूर्ण नागरिक तयार गर्ने

(ञ) नेपाली मौलिक कला, संस्कृति, सौन्दर्य, आदर्श तथा वैशिष्ट्यहरूको संरक्षण, संवर्धन र विस्तारतर्फ अभिप्रेरित भई नेपाली पहिचानप्रति गौरव गर्ने नागरिक तयार गर्ने

(ट) जलवायु परिवर्तन तथा प्राकृतिक एवम् मानव सिर्जित प्रकोपप्रति सचेत रही सम्भावित जोखिम न्यूनीकरण तथा विपद् व्यवस्थापन गर्न सक्षम नागरिक तयार गर्ने

(ठ) सामाजिक न्यायमा आधारित समृद्ध राष्ट्र निर्माणका निम्ति आवश्यक मानव संसाधनको विकास गर्ने

## ७. विद्यालय शिक्षाको तहगत संरचना

राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ ले विद्यालय शिक्षालाई आधारभूत र माध्यमिक गरी दुईतहमा बाँडेको छ । आधारभूत तहको कक्षा १ मा प्रवेश गर्नुपूर्व १ वर्षको प्रारम्भिक बालविकास तथा शिक्षाको व्यवस्था हुने छ । विद्यालय शिक्षाको संरचनामा कक्षा १ देखि ८ सम्म गरी आठ वर्ष अवधिको आधारभूत शिक्षा र कक्षा ९ देखि १२ सम्मको चार वर्ष अवधिको माध्यमिक शिक्षा कायम गरिएको छ । माध्यमिक शिक्षा साधारण, प्राविधिक तथा व्यावसायिक र परम्परागत गरी तीन धारको हुने छ । माध्यमिक शिक्षाको प्राविधिक तथा व्यावसायिक धारतर्फ थप एक वर्ष अवधिको व्यावहारिक अभ्यास (Apprenticeship) समेटिने छ । सिकारुको उमेर, सिकाइ क्षमतास्तर तथा बालमनोविज्ञान समेतलाई आधार मानी विद्यालय शिक्षाको तहगत र कक्षागत संरचना निम्नबमोजिम निर्धारण गरिएको छ :

**तालिका १ : विद्यालय शिक्षाको तहगत र कक्षागत संरचना**

| विद्यालयको तह | कक्षा | उमेर समूह | सिकाइ क्षमतास्तर |
|---|---|---|---|
| प्रारम्भिक बालविकास तथा शिक्षा | प्रारम्भिक बालविकास तथा शिक्षा | ४ वर्ष | |
| आधारभूत | कक्षा १- ३ | ५ देखि ७ वर्षसम्म | तह १ |
| | कक्षा ४ - ५ | ८ देखि ९ वर्षसम्म | तह २ |
| | कक्षा ६ - ८ | १० देखि १२ वर्षसम्म | तह ३ |
| माध्यमिक | कक्षा ९ - १० | १३ देखि १४ वर्षसम्म | तह ४ |
| | कक्षा ११ - १२ | १५ देखि १६ वर्षसम्म | तह ५ |

## ८. विद्यालय शिक्षाको पाठ्यक्रम संरचना

विद्यालय तहको पाठ्यक्रम संरचना निम्नानुसार रहेको छ :

## ८.१ प्रारम्भिक बालविकास तथा शिक्षाको पाठ्यक्रम संरचना

**तालिका २ : प्रारम्भिक बालविकास तथा शिक्षाको पाठ्यक्रम संरचना**

| क्र.सं. | सिपका क्षेत्रहरू | सिपहरू | वार्षिक समय (घण्टामा) |
|---|---|---|---|
| १. | आधारभूत सिप सिकाइका क्षेत्र | (क) शारीरिक सिप<br>(ख) संवेगात्मक सिप<br>(ग) सामाजिक, सांस्कृतिक र नैतिक सिप<br>(घ) बौद्धिक तथा मानसिक सिप<br>(ङ) स्वास्थ्य, पोषण, सुरक्षा र वातावरण सिप<br>(च) सिर्जनात्मक सिप | ३८४ |
| २. | विषयगत सिप सिकाइका क्षेत्र | (क) भाषिक सिप<br>(ख) पूर्वगणितीय सिप<br>(ग) दृश्यकला, कार्यतरिका र सिर्जनशीलता<br>(घ) वरपरको वातावरण<br>(ङ) सामाजिक सिप | १९२ |
| | | जम्मा | ५७६ |

(उपर्युक्त तालिकामा उल्लिखित क्रियाकलाप र समयबाहेक मनोरञ्जन क्रियाकलाप, बाह्य खेल र आराम गर्ने समय गरी कम्तीमा दैनिक १ घण्टाका दरले वर्षभरिमा २५६ घण्टासम्म वार्षिक समय थप हुनसक्ने छ ।)

## ८.२ आधारभूत शिक्षा (कक्षा १-३) को पाठ्यक्रम संरचना

**तालिका ३ : आधारभूत शिक्षा (कक्षा १-३) को पाठ्यक्रम संरचना**

| क्र. स. | विषयसम्बन्धी क्रियाकलाप | पाठ्यघण्टा | वार्षिक कार्यघण्टा |
|---|---|---|---|
| १. | भाषिक सिप विकाससम्बन्धी क्रियाकलाप (नेपाली) | ५ | १६० |
| २. | भाषिक सिप विकाससम्बन्धी क्रियाकलाप (अङ्ग्रेजी) | ४ | १२८ |
| ३. | गणितीय सिप विकाससम्बन्धी क्रियाकलाप (गणित) | ४ | १२८ |
| ४ | विज्ञान, स्वास्थ्य र शारीरिक शिक्षा, सामाजिक अध्ययन, चारित्रिक विकास तथा सिर्जनात्मक कलासम्बन्धी क्रियाकलाप (सेरोफेरो) | ८ | २५६ |
| ५. | मातृभाषिक सिप/स्थानीय विषयवस्तुसम्बन्धी क्रियाकलाप | ५ | १६० |
| | जम्मा | २६ | ८३२ |

(पठनपाठन सञ्चालनका लागि उपयोग भएको ३२ घण्टाको समयावधिलाई १ पाठ्यघण्टा (Credit hour) मानिएको छ ।)

उल्लिखित संरचनाका आधारमा पाठ्यक्रम निर्माण तथा गर्दा निम्नलिखित पक्षहरू समावेश गरिने छ :

१. भाषिक सिपअन्तर्गत सुनाइ, बोलाइ, पढाइ, लेखाइ सिपको विकास, शब्दभण्डार, आधारभूत सञ्चार सिपको विकास जस्ता पक्षहरूमा ध्यान दिइने छ । गणितीय सिपअन्तर्गत सङ्ख्या र अङ्कको अवधारणाका साथै व्यावहारिक गणितीय ज्ञान तथा व्यावहारिक गणितीय सिपको विकास र प्रयोगमा ध्यान दिइने छ ।
२. विज्ञान, स्वास्थ्य र शारीरिक शिक्षासम्बन्धी क्रियाकलापहरूअन्तर्गत वैज्ञानिक सोच तथा सिपको प्रयोग, विज्ञान, वातावरण, स्थानीय पर्यावरण, स्वास्थ्य र शारीरिक शिक्षा, प्रविधि आदि सिकाइका क्षेत्रअन्तर्गत पर्ने विषयवस्तुहरूसँग सम्बन्धित क्रियाकलापहरू समावेश गरिने छ ।
३. सामाजिक अध्ययन, चारित्रिक विकास तथा सिर्जनात्मक कलासम्बन्धी क्रियाकलापअन्तर्गत सामाजिक मूल्य र मान्यता, चारित्रिक विकास, सिर्जनात्मकता, कला र संस्कृति, जीवनोपयोगी सिप तथा सूचना र सञ्चार प्रविधि आदि सिकाइका क्षेत्रअन्तर्गत पर्ने विषयवस्तुहरूसँग सम्बन्धित क्रियाकलाप समावेश गरिने छ ।
४. स्थानीय विषयअन्तर्गत मातृभाषा, स्थानीय इतिहास तथा संस्कृति, संस्कृत भाषा र स्थानीय ज्ञान, सिप, कला तथा प्रविधिमा आधारित विषयसँग सम्बन्धित क्रियाकलाप पर्ने छन् । सिर्जनात्मक सिप विकाससम्बन्धी क्रियाकलापलाई अन्य विषयक्षेत्रका क्रियाकलापहरूसँग पनि सम्बन्धित गराउनुपर्ने छ । स्थानीय विषयको पाठ्यक्रम र पाठ्यसामग्री विद्यालयले स्थानीय विज्ञ, अभिभावक तथा स्थानीय तहको सहयोग र समन्वयमा विकास गरी कार्यान्वयनमा ल्याउनु पर्नेछ ।

५. संस्कृत, गुरुकुल, गुम्बा/विहार, मदर्सा, किरात मुन्धुम जस्ता परम्परागत शिक्षा पद्धतिका हकमा नेपाली र सामाजिक विषयबाहेक अन्य विषयहरू परम्परागत शिक्षा पद्धतिअनुसार अनुकूलन र विकास गरी कार्यान्वयन गर्न सकिने छ ।

६. संस्कृत तथा परम्परागत शिक्षातर्फको कक्षा १-३ लाई एकीकृत सिद्धान्तअनुरूप साधारण शिक्षा सरहको शिक्षा प्रदान गरिने छ । यस शिक्षामा मातृभाषाका सट्टामा सम्बन्धित भाषा (संस्कृत रचना, भोट भाषा, अरेबिक र उर्दू भाषा, लिम्बू भाषा आदि) का पाठ्यक्रम र पाठ्यसामग्री कार्यान्वयन गरिने छ ।

७. विज्ञान तथा वातावरण, सामाजिक अध्ययन, स्वास्थ्य तथा शारीरिक शिक्षा र सिर्जनात्मक कला विषयलाई अन्तरविषयक ढाँचाको पाठ्यक्रमका रूपमा हाम्रो सेरोफेरो विषयक्षेत्रमा समावेश गरी समग्रमा गणित, नेपाली भाषा, अङ्ग्रेजी भाषा र हाम्रो सेरोफेरो विषयक्षेत्रलाई समावेश गरी बहुविषयक ढाँचाको एकीकृत पाठ्यक्रम विकास गरिने छ । त्यसै गरी कक्षा १-३ का विद्यार्थीका लागि आवश्यक हुने व्यवहारकुशल सिपहरूलाई आवश्यकतानुसार सबै विषयक्षेत्र र कक्षामा एकीकृत गरिने छ ।

## ८.३ आधारभूत शिक्षा (कक्षा ४-५) को पाठ्यक्रम संरचना

**तालिका ४ : आधारभूत शिक्षा (कक्षा ४-५) को पाठ्यक्रम संरचना**

| क्र. स. | विषय | पाठ्यघण्टा | वार्षिक कार्यघण्टा |
|---|---|---|---|
| १. | नेपाली | ५ | १६० |
| २. | अङ्ग्रेजी | ५ | १६० |
| ३. | गणित | ५ | १६० |
| ४ | विज्ञान तथा प्रविधि | ५ | १६० |
| ५. | सामाजिक अध्ययन तथा मानव मूल्य शिक्षा | ५ | १६० |
| ६. | स्वास्थ्य, शारीरिक तथा सिर्जनात्मक कला | ३ | ९६ |
| ७. | मातृभाषा/स्थानीय विषय | ४ | १२८ |
| जम्मा | | ३२ | १०२४ |

उल्लिखित संरचनाका आधारमा पाठ्यक्रम निर्माण गर्दा निम्नलिखित पक्षहरू समावेश गरिने छ :

१. भाषिक विषयअन्तर्गत सुनाइ, बोलाइ, पढाइ, लेखाइ सिपको विकास, शब्दभण्डार, आधारभूत सञ्चार सिप, अभिव्यक्ति सिपको विकास जस्ता पक्षहरूमा ध्यान दिनुपर्दछ । गणितअन्तर्गत सङ्ख्या र अङ्कको अवधारणाका साथै व्यावहारिक गणितीय ज्ञान तथा सिपको विकास र प्रयोगमा ध्यान दिनुपर्दछ । विज्ञान तथा प्रविधि शिक्षासम्बन्धी क्रियाकलापहरूअन्तर्गत वैज्ञानिक सोच तथा सिपको प्रयोग, विज्ञान, वातावरण, स्थानीय पर्यावरण, सूचना र सञ्चार प्रविधि आदि सिकाइका क्षेत्रअन्तर्गत पर्ने विषयवस्तुहरू समावेश गरिने छ । सामाजिक अध्ययन तथा मानवमूल्य शिक्षाअन्तर्गत नेपालको भौगोलिक, सामाजिक तथा ऐतिहासिक पक्ष, सामाजिक मूल्य र मान्यता, चारित्रिक विकास, कला र संस्कृति, जीवनोपयोगी सिप, नागरिक चेतना आदि विषयवस्तुहरू समावेश गरिने छ । स्वास्थ्य, शारीरिक तथा सिर्जनात्मक कलाअन्तर्गत शारीरिक तन्दुरुस्ती, स्वस्थकर बानी, सरसफाइ र जीवनोपयोगी सिप, सिर्जनात्मकता आदिसँग सम्बन्धित विषयवस्तुहरू समावेश गरिने छ । सिर्जनात्मक सिप विकाससम्बन्धी क्रियाकलापलाई अन्य विषयक्षेत्रका क्रियाकलापहरूसँग पनि सम्बन्धित गराउनुपर्दछ ।

२. स्थानीय विषयअन्तर्गत मातृभाषा, स्थानीय इतिहास तथा संस्कृति, संस्कृत भाषा र स्थानीय ज्ञान, सिप, कला तथा प्रविधिमा आधारित विषयसँग सम्बन्धित क्रियाकलाप पर्ने छन् । स्थानीय विषयको पाठ्यक्रम र पाठ्यसामग्री विद्यालयले स्थानीय तहको सहयोग र समन्वयमा स्थानीय विज्ञ तथा अभिभावकको संलग्नतामा विकास गरी कार्यान्वयनमा ल्याउने छ ।

३. संस्कृत तथा परम्परागत शिक्षाआतर्गत आधारभूत शिक्षा (कक्षा ४-५) लाई साधारण शिक्षासरहको शिक्षा प्रदान गरिने छ । यसअन्तर्गत सामाजिक अध्ययन तथा मानवमूल्य शिक्षा विषयसँग सम्बन्धित विषयक्षेत्रलाई आवश्यकताका आधारमा थपघट गरी यस शिक्षाका पाठ्यसामग्रीलाई सन्दर्भ र औचित्यका आधारमा अनुकूलन गरिने छ । मातृभाषाका सट्टामा सम्बन्धित भाषा (संस्कृत भाषा, भोट भाषा, अरेबिक र उर्दू भाषा, लिम्बू भाषा इत्यादि) का पाठ्यक्रम र पाठ्यसामग्री कार्यान्वयन गरिने छ ।

४. गुरुकुल शिक्षातर्फ स्वास्थ्य, शारीरिक तथा सिर्जनात्मक कला विषयका सट्टामा वेद वा नीतिशास्त्र वा मानवमूल्य शिक्षा विषय अध्ययन अध्यापन गर्न सकिने छ । मदर्सा शिक्षातर्फ स्वास्थ्य, शारीरिक तथा सिर्जनात्मक कला विषयका सट्टामा दिनियात विषय अध्ययन अध्यापन गर्न सकिने छ ।

## ८.४ आधारभूत शिक्षा (कक्षा ६-८) को पाठ्यक्रम संरचना

**तालिका ५ : आधारभूत शिक्षा (कक्षा ६-८) को पाठ्यक्रम संरचना**

| | विषय | | | | |
|---|---|---|---|---|---|
| **क्र.स.** | **साधारण** | **संस्कृत शिक्षा/गुरुकुल/वेद विद्याश्रम शिक्षा** | **गोन्पा तथा विहार/मदर्सा शिक्षा** | **पाठ्यघण्टा** | **वार्षिक कार्यघण्टा** |
| १. | नेपाली | नेपाली | नेपाली | ५ | १६० |
| २. | अङ्ग्रेजी | अङ्ग्रेजी वा संस्कृत रचना | अङ्ग्रेजी | ५ | १६० |
| ३. | गणित | गणित | गणित | ५ | १६० |
| ४. | विज्ञान तथा प्रविधि | विज्ञान तथा प्रविधि वा संस्कृत व्याकरण | विज्ञान तथा प्रविधि | ५ | १६० |
| ५. | सामाजिक अध्ययन तथा मानव मूल्य शिक्षा | सामाजिक अध्ययन तथा मानव मूल्य शिक्षा वा कर्मकाण्ड | सामाजिक अध्ययन तथा मानव मूल्य शिक्षा | ५ | १६० |
| ६. | स्वास्थ्य, शारीरिक तथा सिर्जनात्मक कला | संस्कृत भाषा | स्थानीय विषय वा बौद्ध शिक्षा वा सम्भोटा व्याकरण वा अन्य वा आचार शिक्षा (दिनियात) वा कुरान (अरेबिक) | ३ | ९६ |
| ७. | मातृभाषा वा स्थानीय विषय वा संस्कृत भाषा | वेद वा नीति शास्त्र | भोटभाषा वा पाली भाषा वा संस्कृत वा अन्य भाषा वा उर्दू भाषा | ४ | १२८ |
| जम्मा | | | | ३२ | १०२४ |

## ९. आधारभूत शिक्षाका तहगत सक्षमता

### ९.१ आधारभूत शिक्षा (कक्षा १-८) का तहगत सक्षमता

आधारभूत शिक्षाले विद्यार्थीकेन्द्रित शिक्षाका माध्यमद्वारा बालबालिकामा अन्तर्निहित प्रतिभाको विकास गर्ने लक्ष्य राखेको छ । यस तहको शिक्षाको मुख्य उद्देश्य राष्ट्रप्रेम र लोकतन्त्रमा विश्वास गरी राष्ट्रियताको संरक्षण र संवर्धन गर्ने, अधिकार र कर्तव्यको पालनासहित स्वतन्त्रताको सम्मान गर्ने, सामाजिक र प्राकृतिक वातावरणप्रति सचेत भई मानवीय मूल्य र मान्यताअनुकूल व्यवहार गर्ने कर्तव्यनिष्ठ नागरिक उत्पादन गर्ने हो । यस तहको शिक्षा प्राप्त गरिसकेका बालबालिकाहरू आफ्ना विचार आदानप्रदान एवम् दैनिक जीवनमा आइपर्ने व्यावहारिक समस्या समाधान गर्न सक्षम, स्वावलम्बी, परिश्रमी, वैज्ञानिक सुझबुझ भएका, स्वास्थ्यप्रति सचेत र नैतिकवान् हुने छन् । विद्यालय शिक्षाअन्तर्गत आधारभूत शिक्षा (कक्षा १-८) का विद्यार्थीले हासिल गर्ने सक्षमताहरू निम्नबमोजिम हुने छन् :

१. देशप्रेम तथा राष्ट्रिय एकताको भावना एवम् लोकतान्त्रिक मूल्य, मान्यता तथा संस्कार व्यवहारमा प्रदर्शन
२. भाषिक तथा सञ्चार सिपको विकास र व्यावहारिक, सिर्जनात्मक एवम् सान्दर्भिक प्रयोग
३. सूचना र विचारहरूको आदान प्रदान, विश्लेषण तथा सूचना प्रविधिको समुचित प्रयोग
४. तार्किक तथा व्यावहारिक गणितीय ज्ञान, सिप एवम् अभिवृत्ति विकास र प्रयोग
५. वैज्ञानिक अवधारणा, तथ्य, सिद्धान्त र नियमप्रतिको जिज्ञासा एवम् बोध र व्यावहारिक जीवनमा प्रयोग
६. मानव मूल्य र मान्यता एवम् सामाजिक गुणको विकास तथा नागरिक कर्तव्यप्रति सजगता
७. जनसङ्ख्या, वातावरण संरक्षण र दिगो विकासबिचको अन्तरसम्बन्धको बोध र व्यवस्थापनमा सहयोग
८. शारीरिक तन्दुरुस्ती, स्वस्थकर जीवनशैली र जीवनोपयोगी सिप (Life skills) को विकास
९. स्थानीय, आधुनिक पेसा, व्यवसाय र प्रविधि एवम् श्रमप्रति सम्मान तथा व्यवहारकुशल सिप (Soft skills) को प्रयोग
१०. नेपाली कला, साहित्य र संस्कृतिको संरक्षण तथा संवर्धन एवम् सिर्जनशीलताको विकास र प्रयोग
११. राष्ट्रिय तथा अन्तर्राष्ट्रिय परिवेशसँग परिचित भई विविधता, विश्वबन्धुत्व र सहअस्तित्व बोध तथा स्वीकार
१२. दैनिक जीवनमा आइपर्ने व्यावहारिक समस्याहरूको पहिचान, विश्लेषण तथा समाधान

### ९.२ आधारभूत शिक्षा (कक्षा १-३) का तहगत सक्षमता

आधारभूत शिक्षा (कक्षा १-३) को उद्देश्य बालबालिकालाई आधारभूत साक्षरता, गणितीय ज्ञान तथा सिप र जीवनोपयोगी सिपहरूका साथै व्यक्तिगत स्वास्थ्य तथा सरसफाइसम्बन्धी बानीको विकास गर्ने अवसर प्रदान गर्नु हो । आधारभूत शिक्षाको माध्यमबाट बालबालिकाहरू आफू रहेको प्राकृतिक तथा सामाजिक वातावरणसँग परिचित र सचेत हुने छन् । यस तहको पाठ्यक्रम बालबालिकाको उमेरगत क्षमता एवम् रुचिलाई ध्यान दिई एकीकृत सिद्धान्तअनुसार विकास गरिएको छ । आधारभूत शिक्षा (कक्षा १-३) का सक्षमता देहायबमोजिम हुने छन् :

१. आधारभूत भाषिक तथा सञ्चार सिपको विकास र प्रयोग
२. आधारभूत गणितीय अवधारणा र सिपको विकास र प्रयोग
३. अनुशासन, सदाचार र स्वावलम्बन जस्ता सामाजिक एवम् चारित्रिक गुणको विकास
४. विज्ञान, वातावरण, सूचना प्रविधिसम्बन्धी आधारभूत ज्ञानको विकास
५. शारीरिक तन्दुरुस्ती, स्वस्थकर बानी र जीवनोपयोगी सिप (Life skills) को विकास
६. कला तथा सौन्दर्यप्रति अभिरुचि र सिर्जनात्मकताको विकास
७. आफ्नो परिवेशसँग परिचित भई विभिन्न जातजाति, धर्म, भाषा, संस्कृति, क्षेत्रप्रति सम्मान र समभावको विकास

## १०. आधारभूत तह (कक्षा १-३) को विषयक्षेत्रगत पाठ्यक्रम

### १०.१ नेपाली भाषा

#### (क) परिचय

नेपाली भाषा नेपालको सरकारी कामकाजको भाषा हो । यो भाषा नेपालमा बोलिने नेपाली भाषाबाहेकका विभिन्न राष्ट्रभाषाका प्रयोक्ताबिचको सम्पर्क भाषा पनि हो । नेपाली भाषा विद्यालय तहको शिक्षाको माध्यम भाषा भएकाले विद्यालय तहको प्रारम्भिक कक्षादेखि नै अनिवार्य विषयका रूपमा पठनपाठन हुँदै आएको छ । नेपाली भाषाको पठनपाठनलाई व्यावहारिक र प्रभावकारी बनाउनु समयको आवश्यकता पनि हो । उक्त आवश्यकतालाई ख्याल गरी विभिन्न सरोकारवालाहरूको सुझाव तथा राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ को मर्मअनुरूप यो पाठ्यक्रम विकास गरिएको हो ।

विश्वमा भएका अनुसन्धानहरूले भाषालाई सिकाइको प्रमुख र आधारभूत पक्ष मान्दै आएका छन् । भाषा विचार विनिमयका साथै सिकाइको माध्यम र चिन्तनको आधार पनि हो । भाषाका सिपहरूमार्फत सिकाइलाई प्रभावकारी बनाउन भाषाको मुख्य भूमिका रहन्छ । यस पाठ्यक्रममा भाषिक सिपमार्फत विद्यार्थीको सिकाइ क्षमता अभिवृद्धि गर्ने लक्ष्य राखिएको छ । भाषिक सिकाइलाई थप प्रभावकारी बनाउन र माथिल्लो तहसँगको स्तरण र सन्तुलन कायम गर्न पाठ्यक्रममा सममामयिक सुधार गर्न आवश्यक भएकाले यो पाठ्यक्रम विकास गरिएको हो ।

नेपालमा विद्यालय तहको प्रारम्भिक कक्षाहरूमा एकीकृत पाठ्यक्रम कार्यान्वयन गर्ने नीतिगत व्यवस्था रहेको छ । विद्यालय तहका प्रारम्भिक कक्षामा शिक्षण गरिने विषयक्षेत्रहरूको एकीकृत शिक्षणका लागि नेपाली विषयको यस पाठ्यक्रमको विकास गर्न आवश्यक देखिएको हो । त्यसैले सक्षमतामा आधारित भाषिक सिपगत सिकाइ उपलब्धिलाई एकीकृत पाठ्यक्रमका अवधारणाअनुसार रूपान्तरण गर्ने अभिप्रायले नेपाली विषयको पाठ्यक्रम विकास गरिएको छ । एकीकृत पाठ्यक्रमले भाषिक ज्ञान र सिप, सिकाइ प्रक्रिया, भाषिक सामर्थ्य र प्रयोग, भाषिक तत्त्वगत सन्तुलन, विद्यालयभित्रको सिकाइ र विद्यार्थीको वास्तविक जीवन, अन्तरसम्बन्धित भाषिक सिकाइ क्षेत्रहरूलगायतको एकीकरणमा जोड दिइएको छ । यसमा सिकाइ क्षेत्रलाई विषयक्षेत्रगत एकाइमा विभाजन गरी भाषिक सिप, व्यवहारकुशल सिप, विद्यार्थीको वैयक्तिक सिकाइ क्षमतालाई सम्बोधन गर्ने उपागम र भाषिक प्रकार्यलाई एकीकृत रूपमा प्रस्तुत गरिएको छ । पाठ्यक्रम कार्यान्वयनका क्रममा सिकाइ सामग्रीको प्रयोग तथा कक्षा शिक्षण र मूल्याङ्कन प्रक्रियालाई प्रभावकारी बनाउन यस पाठ्यक्रममा सिकाइ सहजीकरण प्रक्रिया र विद्यार्थी मूल्याङ्कन रणनीतिसमेत समावेश गरिएको छ ।

#### (ख) तहगत सक्षमता

यस तहको अन्त्यमा विद्यार्थीहरूमा निम्नलिखित समक्षता हासिल हुने छन् :

१. कुराकानी, संवाद, छलफल र प्रश्नोत्तरका क्रममा दोहोरो सञ्चार
२. चित्र, घटना, परिवेश र पाठगत सन्दर्भका आधारमा विषयवस्तुको बोध र अभिव्यक्ति
३. शब्दमा प्रयुक्त ध्वनि र वर्णको शुद्ध उच्चारण
४. वर्ण, मात्रा र शब्दको सङ्केतन र विसङ्केतन गरी शुद्ध बोलाइ र लेखाइ
५. प्रवाहपूर्ण पठन, उपयुक्त बोध र अभिव्यक्ति
६. श्रव्य, दृश्य र श्रव्यदृश्य सामग्रीको बोधसहितको भाषिक कार्य
७. मौखिक र लिखित अभिव्यक्तिमा सिर्जनात्मक तथा समालोचनात्मक शिल्पको प्रयोग

#### (ग) कक्षागत सिकाइ उपलब्धि

**तालिका ६ : नेपाली विषयका कक्षागत सिकाइ उपलब्धि**

| कक्षा १ | कक्षा २ | कक्षा ३ |
|---|---|---|
| १. कुराकानी, संवाद, छलफल र प्रश्नोत्तरका क्रममा उपयुक्त भाषाको प्रयोग गर्न | १. कुराकानी, संवाद, छलफल र प्रश्नोत्तरमा सहभागी भई उपयुक्त भाषाको प्रयोग गर्न | १. उपयुक्त भाषाको प्रयोग गरी कुराकानी, संवाद, छलफल र प्रश्नोत्तर गर्न |
| २. पारिवारिक परिवेशमा प्रयोग हुने शब्द पहिचान गरी प्रयोग गर्न | २. पारिवारिक र विद्यालयीय परिवेशमा प्रयोग हुने शब्द पहिचान गरी प्रयोग गर्न | २. पारिवारिक, विद्यालयीय र सामाजिक परिवेशमा प्रयोग हुने शब्द पहिचान गरी प्रयोग गर्न |
| ३. सङ्केतक जोडी विभिन्न आकृति र चित्र निर्माण गर्न | ३. उस्तै उस्तै ध्वनि तथा समान संरचना भएका शब्दको प्रयोग गरी भाषिक सञ्चार गर्न | ३. उस्तै उस्तै ध्वनि तथा समान संरचना भएका शब्दको प्रयोग गरी भाषिक सञ्चार गर्न |
| ४. स्वर वर्ण पहिचान गरी उच्चारण गर्न | ४. पाठ पढी छलफल तथा प्रश्नोत्तर गर्न र पाठको संरचना, घटनाक्रम र सार बताउन | ४. पाठका आधारमा घटना वर्णन, अनुभव वर्णन, बुँदा लेखन र तार्किक विश्लेषण गर्न |
| ५. व्यञ्जन वर्ण पहिचान गरी उच्चारण र वर्ण विभेदीकरण गर्न | ५. विषयवस्तुका आधारमा कुराकानी र छलफल गरी लिखित अभिव्यक्ति दिन | ५. विषयवस्तुका आधारमा कुराकानी र छलफल गरी लिखित अभिव्यक्ति दिन |
| ६. पाठमा प्रयुक्त दैनिक प्रयोगमा आउने शब्द, लब्ध शब्द, शीर्ष शब्द तथा विसङ्केतक शब्द पढ्न | ६. शब्दका वर्ण विभाजन गर्न र वर्ण जोडेर, थपेर, झिकेर र परिवर्तन गरेर नयाँ शब्द निर्माण गर्न | ६. शब्दका वर्ण विभाजन गर्न र वर्ण जोडेर, थपेर, झिकेर र परिवर्तन गरेर नयाँ शब्द निर्माण गर्न |
| ७. पढेका वर्ण तथा मात्राको सङ्केतन र विसङ्केतन गरी लेखन ढाँचाको अनुकरण गर्न | ७. शब्द शब्द जोडेर वा छुट्याएर नयाँ शब्दको पहिचान गरी उच्चारण तथा शब्दसूची निर्माण र | ७. शब्द शब्द जोडेर वा छुट्याएर शब्दको पहिचान गरी तिनको उच्चारण तथा शब्दसूची निर्माण र प्रयोग गर्न |
| ८. हर्ष, चिन्ता, घृणा, आश्चर्य, उत्सुकता जस्ता संवेगात्मक अभिव्यक्ति बुझेर प्रतिक्रिया व्यक्त | | |

| | | |
|---|---|---|
| गर्न<br>९. विभिन्न शीर्षक, चित्र, परिवेश र सन्दर्भका आधारमा छलफल र प्रश्नोत्तर गर्न<br>१०. शब्दअनुसारका चित्र र चित्रअनुसारका शब्द पहिचान गरी प्रश्नोत्तर गर्न<br>११. शब्दमा अक्षर छुट्याउन, जोड्न, थप्न, हटाउन र परिवर्तन गर्न<br>१२. विसङ्केतक शब्दका सुरु र अन्त्यका ध्वनि पहिचान र उच्चारण गर्न<br>१३. पाठगत परिवेश, पात्र र सन्दर्भको पहिचान, छलफल, प्रश्नोत्तर एवम् तुलना गर्न<br>१४. पाठ्यसामग्री पढेर नयाँ शब्द पहिचान, अर्थबोध र प्रयोग गर्न<br>१५. शब्दमा प्रयोग भएका संयुक्त व्यञ्जन वर्ण पहिचान र उच्चारण गर्न<br>१६. क्रियाका काल, पदसङ्गति र चिह्नको सचेततासहित मौखिक तथा लिखित अभिव्यक्ति दिन | प्रयोग गर्न<br>८. शब्दको सन्दर्भगत अर्थ पहिचान र प्रयोग गर्न<br>९. प्राप्त सूचना तथा पढेका सामग्रीका आधारमा विषयवस्तु, पात्र र घटनाको बोध गरी प्रतिक्रिया व्यक्त गर्न<br>१०. हलन्त र संयुक्त व्यञ्जन वर्ण प्रयोग भएका शब्दको पहिचान गरी उच्चारण र अर्थबोध गर्न<br>११. चित्र, शीर्षक, पाठको परिवेश र सन्दर्भका आधारमा छलफल, प्रश्नोत्तर र तुलना गर्न<br>१२. पदसङ्गति मिलाई लेख्यचिह्न र क्रियाका कालको उपयुक्त प्रयोग गरी वाक्य तथा अनुच्छेद रचना गर्न<br>१३. सर्गपरक शब्दको पहिचान गरी शब्द निर्माण र उच्चारण गर्न<br>१४. पाठमा प्रयुक्त दैनिक प्रयोगमा आउने शब्द, लब्ध शब्द तथा शीर्ष शब्द पढ्न<br>१५. हर्ष, चिन्ता, घृणा, आश्चर्य, उत्सुकता जस्ता संवेगात्मक अभिव्यक्ति बुझेर प्रतिक्रिया व्यक्त गर्न<br>१६. पाठ्यसामग्री पढेर नयाँ शब्द पहिचान, अर्थबोध र प्रयोग गर्न<br>१७. शब्दअनुसारका चित्र र चित्रअनुसारका शब्द पहिचान गरी प्रश्नोत्तर गर्न<br>१८. शब्द, वाक्य र अनुच्छेदको अनुलेखन, श्रुतिलेखन, निर्देशित लेखन र सिर्जनात्मक लेखन गर्न | ८. शब्दको सन्दर्भगत अर्थ पहिचान र प्रयोग गर्न<br>९. प्राप्त सूचना तथा पढेका सामग्रीका आधारमा विषयवस्तु, पात्र र घटनाको बोध गरी प्रतिक्रिया व्यक्त गर्न<br>१०. शीर्षक र पूर्वज्ञानका आधारमा पाठ पढ्न र त्यसका आधारमा स्वसिकाइको परीक्षण गर्न<br>११. हलन्त र संयुक्त व्यञ्जन वर्ण प्रयोग भएका शब्दको पहिचान गरी उच्चारण र अर्थबोध गर्न<br>१२. सन्दर्भ सामग्री पढेर विषयवस्तु बोध गरी लेख्न<br>१३. पाठका चरित्र, परिवेश र घटनाको वर्णन गर्न<br>१४. पदसङ्गति मिलाई लेख्यचिह्न र क्रियाका कालको उपयुक्त प्रयोग गरेर वाक्य तथा अनुच्छेद रचना गर्न<br>१५. लिङ्ग, वचन, पुरुष र आदरका आधारमा सरल वाक्यमा परिवर्तन गर्न<br>१६. सर्गपरक शब्दको पहिचान गरी उच्चारण र शब्दसूची निर्माण गर्न<br>१७. पाठमा प्रयुक्त दैनिक प्रयोगमा आउने शब्द, लब्ध शब्द तथा शीर्ष शब्द पढ्न<br>१८. हर्ष, चिन्ता, घृणा, आश्चर्य, उत्सुकता जस्ता संवेगात्मक अभिव्यक्ति बुझेर प्रतिक्रिया व्यक्त गर्न<br>१९. स्थानीय परिवेश, सन्दर्भ तथा विषयवस्तु झल्किने शीर्षक वा विषयवस्तु छनोट गरी अनुच्छेद लेख्न<br>२०. शब्दअनुसारका चित्र र चित्रअनुसारका शब्द पहिचान गरी प्रश्नोत्तर गर्न<br>२१. तथ्य, सन्दर्भ, सूचना र पूर्वज्ञानमा आधारित भई मौखिक र लिखित उत्तर दिन<br>२२. शब्द, वाक्य र अनुच्छेदको अनुलेखन, श्रुतिलेखन, निर्देशित लेखन र सिर्जनात्मक लेखन गर्न |

## (घ) विषयवस्तुको क्षेत्र र क्रम

**तालिका ७ : नेपाली विषयको विषयवस्तुको क्षेत्र र क्रम**

| भाषिक सिपगत क्षेत्र | भाषिक तत्त्वगत क्षेत्र | विषयवस्तुको क्षेत्र र क्रम | | |
|---|---|---|---|---|
| | | कक्षा १ | कक्षा २ | कक्षा ३ |
| १. सुनाइ र बोलाइ | १.१ ध्वनि सचेतीकरण | • पारिवारिक परिवेशमा प्रयोग हुने शब्दको उच्चारण<br>• शिष्टाचारका लागि प्रयोग हुने शब्दको उच्चारण<br>• कुराकानी, सोधपुछ र प्रश्नोत्तर<br>• स्वर तथा व्यञ्जन वर्णगत वर्णको ध्वनि, उच्चारण अभ्यास तथा वर्ण विभेदीकरण<br>• शब्दका सुरु र अन्त्यका ध्वनि उच्चारण अभ्यास<br>• वर्ण जोडेर, छुट्याएर झिकेर, थपेर र परिवर्तन गरेर शब्द निर्माण<br>• शब्दका वर्ण विभाजन<br>• हलन्त तथा संयुक्त व्यञ्जन वर्णको वर्णगत ध्वनि तथा उच्चारण अभ्यास | • विद्यालय तथा समुदायमा प्रयोग हुने शब्द तथा आदरसूचक एवम् आज्ञासूचक शब्द पहिचान र उच्चारण<br>• संवाद, छलफल र प्रश्नोत्तर<br>• उस्तै उस्तै सुनिने ध्वनि उच्चारण<br>• पाठगत नयाँ शब्द पहिचान र उच्चारण<br>• शब्दका सुरु र अन्त्यका वर्णगत ध्वनि पहिचान र उच्चारण<br>• शब्दका वर्णगत ध्वनि जोडाइ र छुट्याइ<br>• लेख्य चिह्नका आधारमा हुने उच्चारणगत भिन्नता पहिचान र प्रयोग<br>• अनुस्वार र चन्द्रबिन्दु प्रयोग भएका शब्दको शुद्ध उच्चारण<br>• हलन्त र संयुक्त व्यञ्जन वर्ण प्रयोग भएका शब्द पहिचान र उच्चारण<br>• अनुमान र कल्पना गरी मौखिक वर्णन<br>• विषयवस्तु, पात्र र घटनासम्बन्धी मौखिक वर्णन<br>• शब्द शब्द जोडेर वा छुट्याएर उच्चारण<br>• मूल शब्दका अगाडि एवम् पछाडि आएका ध्वनि जोडाइ र छुट्याइ | • पारिवारिक, विद्यालयीय र सामाजिक गतिविधिमा प्रयोग हुने शब्द पहिचान र उच्चारण<br>• सम्मानबोधक शब्दको प्रयोग र उच्चारण<br>• कुराकानी, संवाद, अन्तरक्रिया र प्रश्नोत्तर<br>• बालगीत, बालकविता, बालकथा तथा सूचनामूलक पाठ पठन<br>• सरल तथा जोडेमोडेका वर्णयुक्त शब्दको पहिचान र उच्चारण<br>• संयुक्त व्यञ्जन वर्ण प्रयोग भएका शब्द उच्चारण<br>• समान र असमान ध्वनि भएका शब्दहरू पहिचान र उच्चारण<br>• प्राकृतिक तथा सामाजिक परिवेशका चित्रवर्णन |
| | १.२ श्रव्य/दृश्य बोध | • प्रचलित आकृति, रङ र सङ्केत चिह्नको प्रयोग | • श्रव्यदृश्य सामग्रीका आधारमा हाउभाउसहित छलफल, कुराकानी र | • श्रव्यदृश्य सामग्रीका आधारमा हाउभाउसहित छलफल, कुराकानी, |

| | | | | |
|---|---|---|---|---|
| | | ● श्रव्य र दृश्य सामग्रीका आधारका नाम र मुख्य मुख्य विषयवस्तु वर्णन<br>● हाउभाउ र अभिनयसहितको मौखिक प्रस्तुति र त्यसको अनुकरण<br>● संवेगात्मक अभिव्यक्ति (आश्चर्य, उमङ्ग, उत्सुकता, घृणा, चिन्ता, हर्ष) र प्रतिक्रिया<br>● अनुमान, कल्पना र समस्या पहिचानसहित मौखिक वर्णन | प्रस्तुति<br>● चित्रवर्णन<br>● दुई दृश्य अवस्थाको अवलोकन, तुलना र प्रतिक्रिया<br>● दुईओटा दृश्यहरूको समानता र भिन्नता<br>● सञ्चारका क्रममा प्रचलित आकृति, रङ र सङ्केत चिह्नको प्रयोग<br>● निर्धारित पाठ्यसामग्री, चित्र र पत्रपत्रिकाबाट विषयवस्तुको बोध | प्रस्तुति, सूचना आदानप्रदान र समीक्षा<br>● वर्ण लेखनका वैकल्पिक ढाँचाको पहिचान<br>● चित्रवर्णन<br>● दुई दृश्य अवस्थाको अवलोकन, तुलना र प्रतिक्रिया<br>● सञ्चारका क्रममा प्रचलित आकृति, रङ र सङ्केत चिह्नको प्रयोग<br>● निर्धारित पाठ्यसामग्री, चित्र र पत्रपत्रिकाबाट विषयवस्तु बोध |
| २. पढाइ | २.१ पठन प्रवाह | ● वर्ण, शब्द, सरल वाक्य र अनुच्छेद पठन<br>● पद्यात्मक पाठ पठन<br>● वाचन (सस्वर, द्रुत, एकल, युगल र समूह) | ● गद्यात्मक पाठ (वाक्य र अनुच्छेद : गति, यति, भाव र शुद्धता) पठन<br>● पद्यात्मक पाठ (गति, यति, लय, हाउभाउ र शुद्धता) पठन<br>● वाचन (सस्वर, द्रुत, एकल, युगल र समूह) | ● गद्यात्मक पाठ (वाक्य र अनुच्छेद : गति, यति, भाव र शुद्धता) पठन<br>● पद्यात्मक पाठ (गति, यति, लय, हाउभाउ र शुद्धता) पठन<br>● वाचन (सस्वर, द्रुत, एकल, युगल र समूह) |
| | २.२ पठन बोध | ● सङ्केत, चित्र, शीर्षक, पाठ, कथा, कविता र संवादका विषयवस्तु बोध<br>● स्थानीय परिवेश र पाठगत सन्दर्भका आधारमा छलफल र प्रश्नोत्तर<br>● आफ्नो अनुभव वर्णन<br>● पाठगत पात्र र घटना पहिचान | ● सङ्केत, चित्र, शीर्षक, पाठ, कथा, कविता र संवादका विषयवस्तु बोध<br>● स्थानीय परिवेश र पाठगत सन्दर्भका आधारमा छलफल र प्रश्नोत्तर<br>● आफ्नो अनुभव, पाठगत सन्दर्भ र पूर्वज्ञानअनुसार विषयवस्तुको वर्णन<br>● पाठगत पात्र र घटना पहिचान तथा सार प्रस्तुति<br>● सूचनामूलक सामग्री (पोस्टर, पत्रपत्रिकालगायत) बाट विषयवस्तु बोध | ● सङ्केत, चित्र, पूर्वज्ञान, पदावली र वाक्य, शीर्षक, पाठ, कथा, कविता र संवादका विषयवस्तु बोध<br>● शाब्दिक, तार्किक र वर्णनात्मक प्रश्नोत्तर<br>● पात्र वा शीर्षक परिवर्तन गरी पुनर्लेखन<br>● सिकाइको स्वमूल्याङ्कन<br>● स्थानीय परिवेश र पाठगत सन्दर्भका आधारमा छलफल र प्रश्नोत्तर<br>● आफ्नो अनुभव, पाठगत सन्दर्भ र पूर्वज्ञानअनुसार विषयवस्तु वर्णन<br>● पाठगत तथ्य, सन्दर्भ, पात्र र घटना पहिचान तथा सार प्रस्तुति<br>● सूचनामूलक सामग्री (चिठी, निवेदन, साइन बोर्ड, पोस्टर, सूचना र अन्य विवरण) बाट विषयवस्तुको बोध |
| ३. लेखाइ | ३.१ लेख्यवर्ण सचेतीकरण | ● समान र असमान चित्र, शब्दअनुसारका चित्र र चित्रअनुसारका शब्दको पहिचान र लेखन<br>● सङ्केतक (थोप्ला, सङ्केत, वर्ण र अङ्क) बाट विभिन्न आकृति र चित्र निर्माण<br>● स्वर तथा व्यञ्जन वर्ण तथा मात्राको सङ्केतन, विसङ्केतन र ढाँचाको अनुकरण<br>● चन्द्रबिन्दु (ँ), शिरबिन्दु (ं) र विसर्ग ( : ) को पहिचान र प्रयोग<br>● अक्षर जोडेर तथा झिकेर, थपेर र परिवर्तन गरेर शब्द निर्माण र शब्दका अक्षर विभाजन<br>● समान असमान संरचना भएका शब्दको सूची निर्माण<br>● हलन्त तथा संयुक्त व्यञ्जन वर्ण र लेख्य सङ्केतको प्रयोग<br>● लेख्य वर्णको विविधता ख्याल गरी शब्दको सङ्केतन, विसङ्केतन र प्रयोग | ● शब्दसूची निर्माण<br>● अक्षर जोडेर तथा झिकेर, थपेर र परिवर्तन गरेर शब्द निर्माण र शब्दका अक्षर विभाजन<br>● हलन्त तथा संयुक्त व्यञ्जन वर्ण र लेख्य सङ्केतको प्रयोग<br>● शब्दअनुसारका चित्र र चित्रअनुसारका शब्दको लेखन<br>● शब्दको सुरु र अन्त्यमा उस्तै उस्तै ध्वनि तथा समान संरचना भएका शब्दको पहिचान र लेखन<br>● शब्द शब्दको जोडाइ वा छुट्याइ<br>● मूल शब्दका अगाडि एवम् पछाडि आएका ध्वनिको जोडाइ र छुट्याइ<br>● चन्द्रबिन्दु (ँ), शिरबिन्दु (ं) र विसर्ग ( : ) को प्रयोग<br>● लेख्य वर्णको विविधता ख्याल गरी शब्दको सङ्केतन, विसङ्केतन र प्रयोग | ● वर्ण लेखनका वैकल्पिक ढाँचाको अनुकरण<br>● अक्षर जोडेर तथा झिकेर, थपेर र परिवर्तन गरेर शब्द निर्माण र शब्दका अक्षर विभाजन<br>● हलन्त तथा संयुक्त व्यञ्जन वर्ण र लेख्य सङ्केतको प्रयोग<br>● शब्दअनुसारका चित्र र चित्रअनुसारका शब्दको लेखन<br>● शब्दको सुरु र अन्त्यमा उस्तै उस्तै ध्वनि तथा समान संरचना भएका शब्दको पहिचान र प्रयोग<br>● शब्द शब्दको जोडाइ वा छुट्याइ<br>● मूल शब्दका अगाडि एवम् पछाडि आएका ध्वनिको जोडाइ र छुट्याइ<br>● चन्द्रबिन्दु (ँ), शिरबिन्दु (ं) र विसर्ग ( : ) को प्रयोग<br>● लेख्य वर्णको विविधता ख्याल गरी शब्दको सङ्केतन, विसङ्केतन र प्रयोग |
| | ३.२ लेखाइ | ● सङ्केतक (थोप्ला, सङ्केत, वर्ण र अङ्क) बाट वर्णको ढाँचा निर्माण<br>● छड्के, सिधा र गोलो रेखा कोराइ<br>● चित्र तथा आकृतिमा रङ भराइ<br>● वर्ण, शब्द, वाक्य र अनुच्छेदको अनुलेखन तथा श्रुतिलेखन<br>● विषयवस्तुका आधारमा शब्दभरण र वाक्य पूरण<br>● प्रश्नोत्तर<br>● निर्धारित शीर्षक तथा विषयवस्तुका आधारमा निर्देशित लेखन<br>● स्वतन्त्र रचना | ● शब्द, वाक्य र अनुच्छेदको अनुलेखन तथा श्रुतिलेखन<br>● प्रश्नोत्तर र अन्य ढाँचामा लिखित प्रतिक्रिया<br>● विषयवस्तुको सिलसिला तथा क्रम मिलान<br>● पाठगत पात्र तथा सन्दर्भ परिवर्तन गरी पुनर्लेखन<br>● निर्धारित शीर्षक तथा विषयवस्तुका आधारमा निर्देशित र स्वतन्त्र रचना<br>● विषयवस्तुका आधारमा शब्दभरण र वाक्य पूरण<br>● कार्यमूलक व्याकरण र लेख्य चिह्नको | ● शब्द, वाक्य र अनुच्छेदको अनुलेखन तथा श्रुतिलेखन<br>● पाठगत प्रश्नोत्तर, बुँदा टिपोट र भाव विस्तार<br>● विषयवस्तुको सिलसिला तथा क्रम मिलान<br>● विषयवस्तुका आधारमा शब्दभरण र वाक्य पूरण<br>● पाठगत पात्र तथा सन्दर्भ परिवर्तन गरी पुनर्लेखन<br>● परम्परागत मूल्यमान्यतापरक अनुच्छेद लेखन |

|  |  |  | प्रयोग गरी लेखन अभ्यास<br>● निर्धारित शीर्षक तथा विषयवस्तुका आधारमा निर्देशित लेखन<br>● स्वतन्त्र रचना | ● निर्धारित विषयवस्तुको मौलिक वाक्यमा पुनकर्थन<br>● कार्यमूलक व्याकरण र लेख्य चिह्नको प्रयोग गरी लेखन अभ्यास<br>● निर्धारित शीर्षक तथा विषयवस्तुका आधारमा निर्देशित लेखन<br>● स्वतन्त्र रचना |
|---|---|---|---|---|
| ४. शब्दभण्डार र कार्यमूलक व्याकरण | ४.१ शब्द भण्डार | ● वस्तु वा चित्रको नाम, सम्मानबोधक शब्दको उच्चारण, अर्थबोध र प्रयोग<br>● दैनिक प्रयोगमा आउने शब्द, लब्ध शब्द, शीर्ष शब्द तथा विसङ्केतक शब्दको उच्चारण, अर्थबोध र प्रयोग<br>● धारणा र शब्दलाई सिकाइमा उपयोग<br>● नयाँ शब्दको पहिचान, अर्थबोध र प्रयोग<br>● आफ्नो परम्परागत मूल्यमान्यताका बारेमा छलफल | ● दैनिक प्रयोग हुने शब्द, शीर्ष शब्द र विषयक्षेत्रगत शब्दको उच्चारण, अर्थबोध र प्रयोग<br>● अर्थ सामीप्य भएका शब्दहरू (टुसुक्क बस्नु, मुसुक्क हाँस्नुलगायत) पहिचान, उच्चारण, अर्थबोध र प्रयोग<br>● पाठबाट नयाँ शब्द पहिचान, उच्चारण, अर्थबोध र प्रयोग<br>● समूहबोधक शब्दको उच्चारण, अर्थबोध र प्रयोग<br>● पठन सामग्री, अनुभव र अभ्यासका आधारमा नयाँ शब्द उच्चारण, अर्थबोध र प्रयोग<br>● सांस्कृतिक सन्दर्भमा प्रयोग हुने शब्द सङ्कलन, उच्चारण र प्रयोग<br>● स्थानीय रूपमा प्रचलित शब्दहरूको प्रयोग<br>● सम्मानबोधक शब्दको प्रयोग | ● निर्देशित शब्दका वर्णहरू प्रयोग गरी नयाँ शब्दहरू निर्माण<br>● पर्यायवाची, विपरीतार्थी र धेरै अर्थ दिने शब्दको पहिचान र प्रयोग<br>● निर्देशित शब्दको उच्चारण, अर्थबोध र प्रयोग<br>● विद्यालयमा प्रयोग गरिने वस्तु जनाउने शब्दको पहिचान, उच्चारण, अर्थबोध र प्रयोग<br>● पाठबाट नयाँ शब्द पहिचान, उच्चारण, अर्थबोध र प्रयोग<br>● सन्दर्भगत प्रयोगमा आउने शब्दको उच्चारण, अर्थबोध र प्रयोग<br>● आफ्नो परम्परा र रीतिरिवाजको वर्णन<br>● पठन सामग्री, अनुभव र अभ्यासका आधारमा नयाँ शब्द उच्चारण, अर्थबोध र प्रयोग<br>● बाल शब्दकोशको प्रयोग<br>● सम्मानबोधक शब्दको प्रयोग |
|  | ४.२ कार्यमूलक व्याकरण | ● पदसङ्गति (लिङ्ग, वचन, पुरुष र आदर)<br>● क्रियाका काल र पक्ष<br>● लेख्य चिह्न प्रयोग (पूर्णविराम, अल्पविराम, प्रश्नवाचक, विस्मयादिबोधक र उद्धरण चिह्न) | ● पदसङ्गति (लिङ्ग, वचन, पुरुष र आदर)<br>● क्रियाका काल र पक्ष<br>● लेख्य चिह्न प्रयोग (पूर्णविराम, अल्पविराम, प्रश्नवाचक, विस्मयादिबोधक र उद्धरण चिह्न) | ● पदसङ्गति (लिङ्ग, वचन, पुरुष र आदर)<br>● क्रियाका काल र पक्ष<br>● लेख्य चिह्न प्रयोग (पूर्णविराम, अल्पविराम, प्रश्नवाचक, विस्मयादिबोधक र उद्धरण चिह्न) |

## १०.२ गणित

### (क) परिचय

गणितीय ज्ञान, सिप र अभिवृत्ति दैनिक जीवनका क्रियाकलापहरूसँग प्रत्यक्ष सम्बन्धित हुन्छन् । गणितले मानिसमा समालोचनात्मक रूपले सोच्ने, तार्किक निर्णय दिने, दैनिक जीवनमा आउने समस्याहरूलाई समाधान गर्नेलगायत प्राप्त सूचनाको प्रस्तुति, विश्लेषण र उपयोगका लागि आवश्यक सिपहरूको विकासमा सहयोग पुऱ्याउँछ । निरन्तर विकास हुँदै गरेका र मानिसको दैनिक जीवनमा प्रयोगमा आउने विभिन्न वस्तु, साधन, यन्त्र आदिलाई प्रयोगमा ल्याउन तथा वैज्ञानिक अन्वेषण र अनुसन्धानका लागि पनि गणितीय ज्ञान र सिप अपरिहार्य हुन्छ । समाजका सामाजिक, आर्थिक, राजनीतिक, वैज्ञानिक, भौगोलिक, ऐतिहासिकलगायत मानव जीवनका सम्पूर्ण पक्षसँग सम्बन्धित र तत्सम्बन्धी सम्पूर्ण विषयहरूको अध्ययनका लागि समेत गणितीय ज्ञान र सिप अत्यावश्यक छ । गणित विषयको यस पाठ्यक्रमले विद्यार्थीहरूका दैनिक जीवनसँग सम्बन्धित क्रियाकलापहरू सञ्चालन गर्न र समस्या समाधानका लागि आवश्यक न्यूनतम गणितीय ज्ञान, सिप र अभिवृत्तिको विकास गराउने लक्ष्य लिएको छ । त्यसै गरी यस पाठ्यक्रमले कक्षा ३ को पढाइपछि कक्षा ४ मा पढ्नका लागि पूर्वाधारका रूपमा आवश्यक गणितीय ज्ञान र सिपको विकास गराउने लक्ष्य पनि राखेको छ । यसका लागि पाठ्यक्रमलाई विद्यार्थीहरूको आवश्यकता एवम् रुचिअनुसार सामयिक, उपयोगी र व्यवहारमूलक बनाउने प्रयास गरिएको छ ।

विद्यालय शिक्षाको मूल दस्तावेजको रूपमा रहेको राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ मा आधारभूत तहको कक्षा १ देखि ३ सम्म एकीकृत पाठ्यक्रम ढाँचा अवलम्बन गर्ने नीति लिइने व्यवस्था भएअनुसार विभिन्न क्षेत्रबाट प्राप्त सुझावहरू समेतका आधारमा बहुविषयक ढाँचाको एकीकृत पाठ्यक्रमअन्तर्गत गणितीय विषयवस्तु पनि समावेश गरिएको छ । विद्यार्थीहरूमा समस्या समाधान गर्ने, तर्क प्रस्तुत र पुष्टि गर्ने, सामग्रीको छनोट र गणना गर्ने, सिकेका कुरालाई नयाँ अवस्थामा प्रयोग गर्ने जस्ता सिपहरूको साथै व्यवहारकुशल सिप विकास गर्ने गरी गणित विषयको पाठ्यक्रमलाई एकीकृत ढाँचामा प्रस्तुत गरिएको छ । यो विषयको पठनपाठनका लागि कक्षा १, २ र ३ प्रत्येकमा पाठ्यभार ४ र वार्षिक कार्यघण्टा १२८ छुट्याइएको छ ।

आधारभूत तहअन्तर्गत कक्षा १-३ को गणितमा ज्यामिति, सङ्ख्याको ज्ञान, गणितका आधारभूत क्रियाहरू, नाप र साधारण ग्राफ गरी पाँचओटा विषयक्षेत्र समेटिएको छ । यी विषयक्षेत्रअन्तर्गतका विषयवस्तुलाई विभिन्न बहुविषयक र विषयक विषयक्षेत्रमा सङ्गठित गरी एकीकृत गरिएको छ ।

### (ख) तहगत सक्षमता

कक्षा १-३ को गणित विषय अध्ययनपश्चात विद्यार्थीहरूमा निम्नलिखित सक्षमताहरू विकास हुने छन् :

१. दुई आयामिक ज्यामितीय आकृतिहरूको पहिचान, मापन र रचना
२. पाँच अङ्कसम्मका सङ्ख्यालाई देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्क प्रयोग गरी दैनिक जीवनमा प्रयोग
३. स्थानीय सङ्ख्याङ्कन पद्धतिको प्रयोग
४. भिन्नको अवधारणा बोध र तुलना गर्ने क्षमता विकास
५. गणितीय आधारभूत क्रियाहरूको प्रयोग गरी दैनिक जीवनका समस्या समाधान
६. उपयुक्त सामग्री तथा एकाइ प्रयोग गरी वस्तुहरू तथा समयको व्याख्या तथा दैनिक जीवनका समस्या समाधानमा प्रयोग
७. नेपाली मुद्रा चिनेर दैनिक हिसाब गर्न सक्ने क्षमता विकास
८. साधारण ग्राफ र तालिकाबाट जानकारी हासिल
९. गणितीय ज्ञान, सिप, सोच र अभिवृत्तिको विकास तथा दैनिक जीवनमा प्रयोग

### (ग) कक्षागत सिकाइ उपलब्धि

**तालिका ८ : गणित विषयका कक्षागत सिकाइ उपलब्धि**

| कक्षा १ | कक्षा २ | कक्षा ३ |
|---|---|---|
| १. स्थानको आधारमा वस्तुहरूलाई भित्र र बाहिर, अगाडि र पछाडि, तल र माथि, दायाँ, बायाँ र बिच, नजिक र टाढा छुट्याउन<br>२. सिधा रेखा र वक्र रेखा पहिचान गर्न, ट्रेस गर्न र चित्र कोर्न<br>३. आफ्नो वरपर पाइने ज्यामितीय आकारहरू (त्रिभुज, चतुर्भुज र वृत्त) चिन्न<br>४. देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कन पद्धतिमा १०० सम्म गन्ती गर्न, पढ्न, लेख्न र तुलना गर्न<br>५. देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कन पद्धतिमा एक देखि बीससम्मका सङ्ख्या अक्षरमा लेख्न ।<br>६. ठोस वस्तुको प्रयोग गरी १ देखि २० सम्मका सङ्ख्याहरूलाई जोर र बिजोर सङ्ख्यामा वर्गीकरण गर्न<br>७. पहिलोदेखि दसौँसम्मका स्थान पहिचान गर्न | १. ठोस वस्तुहरू (जस्तै : सिन्का, तार, बाँस, किला, बाँसका चोया, डोरी, आदि) को प्रयोग गरी त्रिभुज र चतुर्भुजका आकारहरू बनाउन<br>२. त्रिभुज, चतुर्भुज र वृत्तका आकारहरू ट्रेस गर्न<br>३. भुजा र कुनाका आधारमा त्रिभुज र चतुर्भुजको अवधारणा विकास गर्न<br>४. देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कन पद्धतिमा १००० सम्मका सङ्ख्याहरूलाई स्थानमान तालिकामा प्रस्तुत गर्न, स्थानमान भन्न, पढ्न र लेख्न<br>५. १०० सम्मका सङ्ख्याहरूलाई देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कन पद्धतिमा (अक्षरमा) तीन अङ्कसम्मका सङ्ख्याहरूलाई स्थानमान तालिकामा प्रस्तुत गर्न, स्थानमान भन्न, पढ्न र लेख्न<br>६. तीन अङ्कसम्मले बनेका सङ्ख्याहरूमा जोर र बिजोर सङ्ख्या पहिचान गर्न | १. दिइएको वस्तुको किनारा वा रेखाखण्डको नाप लिन र दिइएको नापको रेखाखण्ड खिच्न<br>२. वरपर पाइने ठोस वस्तुमा बनेका कोणहरू देखाउन<br>३. रुलरको प्रयोग गरी कोणहरू खिच्न, नाम लेख्न र तुलना गर्न<br>४. समकोण पहिचान गर्न<br>५. सिधा किनारा (straight edge) भएको वस्तु र सिसाकलम प्रयोग गरी त्रिभुज र चतुर्भुज खिच्न र नाम लेख्न<br>६. आयताकार र वर्गाकार सतह पहिचान गर्न<br>७. पाँच अङ्कसम्मका सङ्ख्याहरूलाई देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कमा स्थानमान तालिकामा प्रस्तुत गर्न, स्थानमान भन्न, पढ्न र लेख्न<br>८. १००० सम्मका सङ्ख्याहरूलाई देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कन पद्धतिअनुसार अक्षरमा पढ्न |

| | | |
|---|---|---|
| ८. योगफल २० सम्म आउने तीनओटा सम्म सङ्ख्याहरूको जोड गर्न<br>९. हात लागी नआउने र योगफल १०० सम्म आउने दुईओटा सङ्ख्याहरूको जोड गर्न<br>१०. ठोस वस्तुको प्रयोग गरी २० सम्मका सङ्ख्याको घटाउ गर्न<br>११. सापटी लिन नपर्ने दुई अङ्कसम्मको सङ्ख्याको घटाउ गर्न<br>१२. दैनिक क्रियाकलापहरूका समय भन्न<br>१३. हप्ताका दिनहरू भन्न र लेख्न<br>१४. चलन चल्तीमा रहेका रु. १०० सम्मका नेपाली सिक्का तथा नोट चिन्न<br>१५. अप्रामाणिक नापोको प्रयोग गरी ठोस वस्तुहरू नाप्न र त्यसको आधारमा  अग्लो र होचो, लामो र छोटो छुट्याउन<br>१६. चित्रग्राफबाट जानकारी लिन र दिन | ७. तीन अङ्कसम्मका सङ्ख्याहरूलाई तुलना गरी बढ्दो वा घट्दो क्रममा पढ्न र लेख्न  ( तीनओटासम्म मात्र)<br>८. सिङ्गो,  आधा र एक चौथाइको अवधारणाको आधारमा   वस्तुहरूको तुलना गर्न<br>९. योगफल १,००० सम्म आउने तीन अङ्कसम्मका सङ्ख्याहरूको जोड गर्न<br>१०. तीन अङ्कसम्मको सङ्ख्याको घटाउ गर्न<br>११. गुणनलाई दोहोरिएको जोडको रूपमा व्यक्त गर्न<br>१२. १० सम्मको गुणन तालिका निर्माण गर्न<br>१३. १० सम्मको गुणनतालिकामा आधारित रहेर दुई अङ्कसम्मको सङ्ख्यालाई १० सम्मको सङ्ख्याले निशेष भाग जाने भाग गर्न<br>१४. घडी हेरी घण्टा र मिनेटमा समय भन्न र लेख्न<br>१५. क्यालेन्डर हेरेर कुनै दिनको मिति (साल, महिना, गते र बार) भन्न र लेख्न<br>१६. रु. १००० सम्मका सिक्का तथा नोट चिन्न<br>१७. रूपान्तर गर्न नपर्ने मुद्रासम्बन्धी जोड र घटाउ गर्न<br>१८. लम्बाइको नापको प्रामाणिक एकाइको पहिचान र रुलरको प्रयोग गरी वस्तुको नाप सेन्टिमिटर र मिलिमिटर स्केलमा पढ्न<br>१९. विभिन्न वस्तुको लम्बाइ सेन्टिमिटर स्केलमा अनुमान गर्न, नाप्न र पुष्टि गर्न<br>२०. किलोग्राम र ग्रामको सम्बन्ध बताउन<br>२१. १०० ग्राम देखि १ किलोग्रामसम्मको प्रामाणिक ढकको प्रयोग गरी वरपरका वस्तुको तौल लिन<br>२२. समान प्रकृतिका भाँडाहरूको अवलोकन गरी क्षमता तुलना गर्न<br>२३. विभिन्न भाँडोहरूको क्षमताको अनुमान गर्न र अप्रामाणिक नापोद्वारा पुष्टि गर्न<br>२४. समान प्रकृतिका कुनै दुईओटा सतहको  अवलोकन गरी क्षेत्रफल तुलना गर्न ।<br>२५. दिइएको तालिकाबाट जानकारी लिन दिन<br>२६. दिइएको चित्रग्राफबाट सदस्यहरूको सङ्ख्या गनेर तालिकामा प्रस्तुत गर्न | र लेख्न<br>९. सङ्ख्याको ढाँचा पहिचान गर्न<br>१०. चार अङ्कसम्मका सङ्ख्याहरूलाई बढ्दो वा घट्दो क्रममा पढ्न र लेख्न<br>११. चार अङ्कसम्मका सङ्ख्याहरूलाई सङ्केतहरू $=$, $>$, $<$ प्रयोग गरी तुलना गर्न<br>१२. स्थानीय सङ्ख्याङ्कन पद्धतिमा २० सम्म पढ्न र लेख्न<br>१३. आधा, एक चौथाइ, तीन चौथाइ,  एक तिहाइ र दुई तिहाइलाई भिन्नको रूपमा लेख्न<br>१४. भिन्नहरू $\frac{1}{2}, \frac{1}{4}, \frac{3}{4}, \frac{1}{3}, \frac{2}{3}$ लाई सामग्री प्रयोग गरी देखाउन<br>१५. चित्रद्वारा माथिका भिन्नहरूमध्ये कुनै दुई ओटा भिन्नहरू तुलना गर्न<br>१६. योगफल १०,००० सम्म आउने चार अङ्कसम्मका सङ्ख्याहरूको जोड गर्न<br>१७. जोड र घटाउबिचको सम्बन्ध पहिचान गर्न<br>१८. चार अङ्कले बनेका सङ्ख्याहरूको घटाउ गर्न<br>१९. तीन अङ्कसम्मको सङ्ख्यालाई दुई अङ्कसम्मको सङ्ख्याले गुणन गर्न<br>२०. तीन अङ्कसम्मको सङ्ख्यालाई १० सम्मको सङ्ख्याले भाग गर्न<br>२१. घडी हेरी घण्टा, मिनेट र सेकेन्डमा समय भन्न र लेख्न<br>२२. समयका एकाइहरूबिचको सम्बन्ध पहिचान गर्न (वर्ष, महिना, हप्ता, दिन, घण्टा, मिनेट र सेकेन्ड)<br>२३. कुनै काममा लागेको समय पत्ता लगाउन<br>२४. रुपियाँलाई पैसामा र पैसालाई रुपियाँमा रूपान्तर गर्न<br>२५. मुद्रासम्बन्धी जोड र घटाउ गर्न<br>२६. मिटर, सेन्टिमिटर र मिलिमिटरको सम्बन्ध बताउन<br>२७. विभिन्न वस्तुको लम्बाइ मिटर वा सेन्टिमिटर स्केलमा अनुमान गर्न, नाप्न र पुष्टि गर्न<br>२८. मिटरलाई सेन्टिमिटर र सेन्टिमिटरलाई मिलिमिटरमा रूपान्तर गर्न<br>२९. वस्तुहरूको तौलको अनुमान गर्न र नापद्वारा यकिन गर्न<br>३०. किलोग्रामलाई ग्राममा रूपान्तर गर्न<br>३१. लिटर र मिलिलिटरको सम्बन्ध बताउन<br>३२. विभिन्न क्षमताका भाँडाहरूको क्षमता लिटर र मिलिलिटर एकाइमा नाप लिन<br>३३. लिटर र मिलिलिटरसम्बन्धी जोड र घटाउ गर्न<br>३४. वर्ग कोठाहरूको सङ्ख्या गनेर वर्गाकार वा आयताकार  समतलीय सतहको क्षेत्रफल पत्ता लगाउन<br>३५. चित्रग्राफ बनाउन |

## (घ) विषयवस्तु तथा तिनको क्षेत्र र क्रम

**तालिका ९ : गणित विषयको विषयवस्तुको क्षेत्र र क्रम**

| विषयक्षेत्र | कक्षा १ | अ.घ. | कक्षा २ | अ.घ. | कक्षा ३ | अ.घ. |
|---|---|---|---|---|---|---|
| १. ज्यामिति | • स्थानगत अवधारणा (भित्र र बाहिर, अगाडि र पछाडि, तल र माथि, दायाँ, बायाँ र बिच, नजिक र टाढा)<br>• सिधा रेखा र वक्र रेखा<br>• ज्यामितीय आकारहरू (त्रिभुज, चतुर्भुज र वृत्त) | १४ | • ठोस वस्तुहरू (जस्तै : सिन्का, तार, बाँस, किला, बाँसका चोया, डोरी, आदि) को प्रयोगबाट त्रिभुज र  चतुर्भुज का आकारहरू निर्माण<br>• त्रिभुज, चतुर्भुज र वृत्तका आकारहरूको ट्रेस<br>• भुजा र कुनाका आधारमा त्रिभुज र चतुर्भुजको अवधारणा विकास | ७ | • दिइएको वस्तुको किनारा वा रेखाखण्डको नाप र दिइएको नापको रेखाखण्ड<br>• ठोस वस्तुमा बनेका कोणहरू<br>• कोणहरूको निर्माण, नाम र तुलना<br>• समकोण पहिचान<br>• सिधा किनारा (straight edge) भएको वस्तु  र सिसाकलमको प्रयोगबाट त्रिभुज र चतुर्भुज निर्माण र नाम<br>• आयताकार र वर्गाकार सतह पहिचान | १६ |

| | | | | | | |
|---|---|---|---|---|---|---|
| २. सङ्ख्याको ज्ञान<br>(क) पूर्ण सङ्ख्या | • देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कन पद्धतिमा १०० सम्मका सङ्ख्याहरू ( सङ्ख्याङ्कमा)<br>• देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कन पद्धतिमा एकदेखि बीससम्म (अक्षरमा) | ४७ | • देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कन पद्धतिमा १००० सम्मका सङ्ख्याहरूको स्थानमान तालिका, स्थानमान र सङ्ख्याङ्कहरू<br>• १०० सम्मका सङ्ख्याहरूलाई देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कन पद्धतिमा (अक्षरमा) | १८ | • पाँच अङ्कसम्मका सङ्ख्याहरूको देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कन पद्धतिमा स्थानमान तालिका, स्थानमान र सङ्ख्याङ्कहरू<br>• १००० सम्मका सङ्ख्याहरूलाई देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कन पद्धतिमा (अक्षरमा)<br>• सङ्ख्याको ढाँचा | १३ |
| | • २० सम्मका जोर र बिजोर सङ्ख्याहरू<br>• दसौं स्थानसम्मका क्रमात्मक सङ्ख्याहरू | ७ | • तीन अङ्कसम्मका जोर र बिजोर सङ्ख्याहरू<br>• तीन अङ्कसम्मका सङ्ख्याहरूको तुलना र बढ्दो वा घट्दो क्रम (तीनओटासम्म मात्र) | ७ | • चार अङ्कसम्मका सङ्ख्याहरूको बढ्दो वा घट्दो क्रम<br>• चार अङ्कसम्मका सङ्ख्याहरूको तुलना (तीनओटासम्म मात्र)<br>• स्थानीय सङ्ख्याङ्कन पद्धतिमा २० सम्मका सङ्ख्याहरू | ९ |
| (ख) भिन्न | | | • सिङ्गो, आधा र एक चौथाइको अवधारणाको आधारमा वस्तुहरूको तुलना | ७ | • आधा, एक चौथाइ, तीन चौथाइ, एक तिहाइ र दुई तिहाइ भिन्न<br>• भिन्नहरू $\frac{1}{2}, \frac{1}{4}, \frac{3}{4}, \frac{1}{3}, \frac{2}{3}$ लाई सामग्री प्रयोग गरी देखाउन<br>• चित्रद्वारा माथिका भिन्नहरूमध्ये कुनै दुईओटा भिन्नहरूको तुलना | ९ |
| ३. गणितका आधारभूत क्रिया<br>(क) जोड | • योगफल २० सम्म आउने तीनओटा सम्म सङ्ख्याहरूको जोड<br>• हात लागी नआउने र योगफल १०० सम्म आउने दुईओटा सङ्ख्याहरूको जोड | २५ | • योगफल १,००० सम्म आउने तीन अङ्कसम्मका सङ्ख्याहरूको जोड (कुनै तीनओटा सङ्ख्याहरू मात्र) | १२ | • योगफल १०,००० सम्म आउने चार अङ्कसम्मका सङ्ख्याहरूको जोड (कुनै तीनओटा सङ्ख्याहरू मात्र) | ८ |
| (ख) घटाउ | • ठोस वस्तुको प्रयोग गरी २० सम्मका सङ्ख्याको घटाउ<br>• सापटी लिन नपर्ने दुई अङ्कसम्मको सङ्ख्याको घटाउ | १९ | • तीनअङ्कसम्मको सङ्ख्याको घटाउ | ११ | • जोड र घटाउबिचको सम्बन्ध<br>• चार अङ्कले बनेका सङ्ख्याहरूको घटाउ | १० |
| (ग) गुणन | | | • गुणन र जोडको सम्बन्ध<br>• १० सम्मको गुणन तालिका निर्माण | १५ | • तीन अङ्कसम्मको सङ्ख्यालाई दुई अङ्कसम्मको सङ्ख्याले गुणन | ११ |
| (घ) भाग | | | • १० सम्मको गुणनतालिकामा आधारित रहेर दुई अङ्कसम्मको सङ्ख्यालाई १० सम्मको सङ्ख्याले निशेष भाग जाने भाग | १० | • तीन अङ्कसम्मको सङ्ख्यालाई १० सम्मको सङ्ख्याले भाग | १० |
| ४. नाप<br>(क) समय | • दैनिक क्रियाकलापहरूको समय<br>• हप्ताका दिनहरू | ५ | • घडी हेरी घण्टा र मिनेटमा समय<br>• क्यालेन्डर हेरेर कुनै दिनको मिति (साल, महिना, गते र बार) | ६ | • घडी हेरी घण्टा, मिनेट र सेकेन्डमा समय<br>• समयका एकाइहरूबिचको सम्बन्ध (वर्ष, महिना, हप्ता, दिन, घण्टा, मिनेट र सेकेन्ड)<br>• कुनै काममा लागेको समय | ८ |
| (ख) मुद्रा | • चलन चल्तीमा रहेका रु. १०० सम्मका नेपाली सिक्का तथा नोट | ३ | • रु. १००० सम्मका सिक्का तथा नोट<br>• रूपान्तर गर्न नपर्ने मुद्रासम्बन्धी जोड र घटाउ (कुनै एउटा एकाइको मात्र) | ६ | • रुपियाँलाई पैसामा र पैसालाई रुपियाँमा रूपान्तर<br>• मुद्रासम्बन्धी जोड र घटाउ | ७ |
| (ग) लम्बाइ | • अप्रामाणिक नापोको प्रयोग र वस्तुहरूको लम्बाइको तुलना (अग्लो र होचो, लामो र छोटो) | ४ | • लम्बाइको नापको प्रामाणीक एकाइको पहिचान र रुलरको सेन्टिमिटर र मिलिमिटर स्केल<br>• विभिन्न वस्तुको लम्बाइ सेन्टिमिटर स्केलमा अनुमान, नाप र पुष्टि | ६ | • मिटर, सेन्टिमिटर र मिलिमिटरको सम्बन्ध<br>• विभिन्न वस्तुको लम्बाइ मिटर वा सेन्टिमिटर स्केलमा अनुमान, नाप र पुष्टि<br>• मिटरलाई सेन्टिमिटर र सेन्टिमिटरलाई मिलिमिटरमा रूपान्तर | ९ |
| (घ) तौल | | | • किलोग्राम र ग्रामको सम्बन्ध पहिचान<br>• १०० ग्राम देखि १ किलोग्रामसम्मको प्रामाणिक ढकको प्रयोग गरी वरपरका वस्तुको तौल | ६ | • वस्तुहरूको तौलको अनुमान र नापद्वारा यकिन<br>• किलोग्रामलाई ग्राममा रूपान्तर | ५ |

| (ङ) क्षमता | | | • समान प्रकृतिका भाँडाहरूको अवलोकन गरी क्षमता तुलना<br>• विभिन्न भाँडाहरूको क्षमताको अनुमान र अप्रामाणिक नापोद्वारा पुष्टि | ७ | • लिटर र मिलिलिटरको सम्बन्ध पहिचान<br>• विभिन्न क्षमताका भाँडाहरूको क्षमता लिटर र मिलिलिटर एकाइमा<br>• लिटर र मिलिलिटरसम्बन्धी जोड र घटाउ (कुनै एउटा एकाइको मात्र) | ७ |
|---|---|---|---|---|---|---|
| (च) क्षेत्रफल | | | • कुनै दुईओटा वर्गाकार वा आयताकार सतहको अवलोकन गरी क्षेत्रफल तुलना | ४ | • वर्ग कोठाहरूको सङ्ख्या गनेर वर्गाकार वा आयताकार समतलीय सतहको क्षेत्रफल | ३ |
| ५. साधारण ग्राफ | • चित्रग्राफ | ४ | • दिइएको तालिकाबाट जानकारी<br>• दिइएको चित्रग्राफबाट सदस्यहरूको सङ्ख्या गनेर तालिकामा प्रस्तुत | ६ | • चित्रग्राफ (सङ्केतको प्रयोग गरी) | ३ |
| जम्मा | | १२८ | | १२८ | | १२८ |

## 10.3 English

### a. Introduction

The English language is a global lingua franca and is an appropriate international language for Nepal to be connected with global community. It is not only the language of international communication but also a language of higher education, mass media, information and communication technology (ICT), business, tourism, science and medicine. In the context of Nepal, English is necessary for various purposes. To be specific, our learners need English to participate in classroom interactions; to study course materials; to read things for pleasure and general information; to gain access to the world body of knowledge; to read and enjoy a wide range of literary texts; to participate in international meetings, seminars and conferences; to communicate with foreigners in general; to enhance their career development; to appreciate movies, plays, talks, radio and television programmes, and many more. English is taught as a compulsory subject from grade one to the bachelor's level in Nepal.

Curriculum Development Centre (CDC) has recently developed the National Curriculum Framework (NCF), 2019 to address the changed socio-political condition of the country and the current needs of the learner. Following the structure of NCF, this curriculum has been designed for basic level (Grades 1-3) education in Nepal, with a view to catering to the immediate needs of children learning English and building a basic foundation for their further studies in and through English. Moreover, it aims at developing a comprehensive communicative competence on the part of the learners. It also includes the language functions which the students need for real life communication and further studies.

The major focus of this curriculum is on language skills viz., listening, speaking, reading and writing. By the end of Grade 3, children will be able to use English effectively in a limited set of situations. This curriculum is based on the principle that children learn English better when they get ample exposure to spoken and written English and sufficient opportunity to use it in stress-free environment. Therefore, it expects the child-friendly learning facilitation process from the teachers. Furthermore, various soft skills appropriate for this level have also been included in the curriculum.

### b. Competencies for Grades 1 - 3

By the end of grade three, students will have developed the competencies to:

1. demonstrate an understanding of simple spoken language
2. respond in simple English with intelligible pronunciation
3. use English for communication inside and outside the classroom
4. read simple texts for understanding and pleasure
5. express opinions, ideas and feelings using simple English
6. work with peers to learn language together.

## c. Grade-wise Learning Outcomes for Grades 1-3

**Table 10 : Grade-wise learning outcomes in English**

| Skill | Grade One | Grade Two | Grade Three |
|---|---|---|---|
| **Listening** | 1. Imitate, identify and discriminate sounds.<br>2. Identify words that have the same initial, medial or final sound.<br>3. Blend individual sounds in simple one-syllable words. (e.g. /s/ /i/ /t/ →sit)<br>4. Recognize, identify and produce rhyming words. (e.g. cat →bat, sat)<br>5. Link an initial sound to a picture of an object that begins with that sound (e.g. Show a picture of a book and identify the initial sound /b/).<br>6. Name a printed letter that matches with the sound (e.g. the teacher says /t/ and the student points to the /t/ letter).<br>7. Match spoken words to printed words (e.g. the teacher pronounces /pin/, and the student selects pin from a set of three word cards).<br>8. Recognize and comprehend words and simple expressions. | 1. Identify and discriminate sounds.<br>2. Identify words that have the same initial, medial or final sound.<br>3. Recognize, identify and produce rhyming words. (e.g. cow →now)<br>4. Identify individual sounds in words.<br>5. Comprehend words and simple expressions.<br>6. Respond to the audio or the teacher verbally and non-verbally.<br>7. Identify key information from a short speech or conversation.<br>8. Follow the message in short simple conversations.<br>9. Perform a variety of listening comprehension tasks.<br>10. Show an understanding of simple stories with visual clues. | 1. Recognize, identify and produce rhyming words. e.g. near →here.<br>2. Comprehend words and simple expressions.<br>3. Listen and respond to a wide variety of spoken stimuli (words, sentences, questions, instructions, etc.) both verbally and non-verbally.<br>4. Follow the message in short simple conversations.<br>5. Identify key information from a short speech or conversation.<br>6. Find out specific information (names, dates, time, etc) from different kinds of simple spoken language.<br>7. Listen in order to participate in a variety of short conversations.<br>8. Perform a variety of listening comprehension tasks.<br>9. Listen and comprehend a range of songs and stories with a variety of |

| | | | |
|---|---|---|---|
| | 9. Respond to the audio or the teacher non-verbally and verbally.<br>10. Respond to simple commands and questions.<br>11. Perform different kinds of listening tasks (e.g. drawing, matching, etc.). | | visual clues. |
| **Speaking** | 1. Imitate and produce sounds and words.<br>2. Blend the initial sounds with other sounds, i.e. onset with rime. (e.g. c+at).<br>3. Pronounce grade appropriate words correctly.<br>4. Give basic personal information about themselves (e.g. name, address, family, nationality) using short words and phrases.<br>5. Ask and answer short, simple questions.<br>6. Sing or recite a song/chant by listening to the teacher or an audio.<br>7. Name people, objects and places and describe them with adjectives. | 1. Decode phonetically regular and irregular words using letter sound knowledge, e.g. rat, too, blank, house, have, said, where, etc.<br>2. Produce words, phrases, simple sentences with intelligible pronunciation.<br>3. Participate in short conversation with teachers and friends using simple English.<br>4. Describe familiar objects, persons and events using simple adjectives and adverbs.<br>5. Ask ans answer short, simple questions.<br>6. Sing or recite a song/chant by listening to the teacher or an audio.<br>7. Talk about present and past. | 1. Produce words, phrases, simple sentences with intelligible pronunciation.<br>2. Participate in short conversations.<br>3. Ask and answer a range of questions.<br>4. Describe people, objects and events using adjectives, adverbs and prepositions.<br>5. Talk about present, past and future events.<br>6. Sing or recite a song/chant by listening to the teacher or an audio.<br>7. Make simple telephone conversation. |
| **Reading** | 1. Read small and capital letters.<br>2. Put sounds together to read words and sentences.<br>3. Recognise and read familiar words accompanied by visuals<br>4. Perform rhymes and chants with appropriate rhyme and rhythm.<br>5. Understand the meaning of grade appropriate words.<br>6. Read words, simple sentences and short paragraphs correctly<br>7. Retrieve specific information from simple sentences.<br>8. Do different kinds of comprehension tasks (answering verbally, matching, action, etc.) | 1. Put sounds together to read words and sentences.<br>2. Recognise and read words with the help of the visuals.<br>3. Recognize and read high frequency words including compound words<br>4. Understand the meaning of grade appropriate words.<br>5. Perform rhymes and chants with appropriate rhyme and rhythm.<br>6. Read sentences and short paragraphs correctly.<br>7. Understand plurals (-s), verb tense, contractions and simple comparatives.<br>8. Show an understanding of different kinds of reading texts (stories, letters, etc.)<br>9. Retrieve specific information (names, number, etc) from reading texts.<br>10. Decode words correctly which have consonant digraphs in initial positions (th, sh, ch, wh), vowel digraphs (oo, ee, ea, oa, aw, ai, ay), initial consonant blends (sw, sn, sk, bl, br, ch, cl, cr, dr, fl, gl, ph, pl, pr, sh, sl, sm, sp, st, th, tr, tw, wh, qu), and final consonant blends (nd, nk, nt, mp). | 1. Decode two-syllabic words using letter-sound knowledge of consonants, consonant blends and digraphs, short and long vowels, and vowel digraphs.<br>2. Recognise silent letters, e.g. e (home), b (comb), k (knee), gh (right), w (write), t (often), l (walk), etc.<br>3. Read words correctly which have initial consonant blends (thr, str, scr), double consonants (tt, pp, rr, gg, nn, ss, ll, ck), word endings (ple, ble, dle, tle, ng, tch), and diphthongs (ou,ow, oy, oi).<br>4. Read multi-syllabic words composed of roots, prefixes, and suffixes.<br>5. Read common abbreviations (e.g., Dr., Mr., AM, PM).<br>6. Perform the rhymes and chants with appropriate rhyme and rhythm.<br>7. Read short texts silently and retrieve specific information (name, number, etc.).<br>8. Read short texts silently and find out the main ideas and supporting details of the text.<br>9. Guess the meaning of unfamiliar words from contexts.<br>10. Consult a dictionary to find out the meaning of words.<br>11. Retrieve required information from para-orthographic texts such as charts, tables, graphs and maps.<br>12. Read poems and short stories for pleasure. |

| | | | |
|---|---|---|---|
| **Writing** | 1. Hold pencil correctly to gain control to draw lines, curves, circles, etc.<br>2. Develop hand-eye coordination through drawing lines and patterns.<br>3. Trace the letters and write them.<br>4. Form lower and upper case letters of regular size and shape.<br>5. Write letters and words in a straight line from left to right with regular spacing between words.<br>6. Copy letters and highly frequent familiar words and phrases correctly and reproduce them.<br>7. Combine and recombine different letters to form words, and put the words in correct order to form simple sentences.<br>8. Use correct spelling of words.<br>9. Write simple phrases and sentences independently.<br>10. Give basic personal information in writing (e.g. name, address, age, nationality).<br>11. Demonstrate good handwriting skills. | 1. Write words in correct order to form simple sentences.<br>2. Write dictated words, phrases and sentences.<br>3. Use capital letters, full stops and question marks correctly.<br>4. Give basic personal information in writing (e.g. name, address, age, nationality, family information, etc.).<br>5. Express ideas in simple sentences.<br>6. Use correct spelling of words.<br>7. Use suffix -s/es to form plural nouns.<br>8. Use present (with/without -s/es) and regular past (-ed) forms of verbs.<br>9. Connect sentences using simple coordinators, (e.g. 'and' and 'but'.)<br>10. Demonstrate good handwriting skills. | 1. Use capital letters, full stops and question marks correctly.<br>2. Connect sentences using simple coordinators (e.g. and, but, because).<br>3. Write in a simple paragraph about oneself, people, places and things.<br>4. Write simple stories through completion, matching with pictures or ordering.<br>5. Use correct spelling of words.<br>6. Use regular and irregular plural nouns.<br>7. Use present (with/without -s/es) and regular past (-ed) forms of verbs<br>8. Arrange words in alphabetical order.<br>9. Use words in meaningful sentences.<br>10. Make compound words e.g. roundtable, playground, etc.<br>11. Write very short simple messages.<br>12. Demonstrate good handwriting skills. |

## d. Scope and sequence of the contents

**Table 11: Scope and sequence of the contents for grade one**

| Theme | Language functions | Exponents/structures/ contents | Activities | Soft skills | Time (in hours) |
|---|---|---|---|---|---|
| 1. Alphabet | - | Upper case and lower case letters from Aa-Zz | • Decoding activities<br>• Phonemic and graphophonemic awareness activities<br>• Pre- listening/reading/ writing activities<br>• Acting/role play<br>• Tracing<br>• Matching<br>• Colouring/drawing<br>• Chants, rhymes and action songs<br>• Puzzles | • Problem solving<br>• Active listening<br>• Team work<br>• Communication | 58 |
| 2. Me and my family | Greeting and leave taking | Good morning /afternoon (name/children)<br>Hello, how are you?<br>I'm fine. Thank you.<br>Bye/See you. | • Drills<br>• Chants, rhymes, and action songs<br>• Role Play<br>• Conversation<br>• Games | • Communication<br>• Team work<br>• Collaboration<br>• Active listening<br>• Taking care of oneself<br>• Self-awareness | 16 |
| | Introducing | I'm Ram. She's Sita.<br>Hello, I'm Raj.<br>My name is Nima. | • Conversation<br>• Role play<br>• Pair work and group work<br>• Games | | |
| | Talking about home and family | I've got two brothers. What's your sister's name? Her name is Sarita.<br>Mahesh is Ram's brother.<br>My father's a farmer. | • Describing family chart<br>• Group discussion<br>• Conversation<br>• Drawing<br>• Games | | |

| | | | • Project work (family profile) | | |
|---|---|---|---|---|---|
| 3. My daily life | Talking about days of the week | What day is today?<br>It's Monday.<br>Is it Monday?<br>Today is Friday. | • Question answer<br>• Chants/rhymes<br>• Dictation<br>• Ordering<br>• Games | • Time management<br>• Managing daily life<br>• Self-discipline<br>• Self-management<br>• Team work<br>• Communication<br>• Self-awareness<br>• Taking care of self | 5 |
| | Expressing ability | I can dance.<br>She can sing.<br>He can jump. | • Chants/rhymes<br>• Language games<br>• Question answer<br>• Action/Role play | | |
| | Telling the time | It is 7 o'clock. | • Demonstration<br>• Conversation<br>• Acting<br>• Drawing<br>• Games | | |
| 4. My school | Talking about present actions | She is drinking.<br>He is dancing.<br>I am writing. | • Acting<br>• Games<br>• Matching pictures | • Communication<br>• Team work<br>• Active listening<br>• Self-awareness | 5 |
| | Giving simple commands | Sit down.<br>Stand up!<br>Come here.<br>Be quiet. | • Acting/Role play<br>• Mimes/gestures<br>• Games<br>• Chants and rhymes | | |
| | Asking for permission | May I play?<br>Yes, you can.<br>No, you can't. | • Acting/Role play<br>• Games<br>• Question answer<br>• Pair work | | |
| 5. Our environment | Identifying | What's this? Who's this? It's a book. This is Mrs. Thapa. Is it a book? Yes, it is/No, it isn't. | • Drilling<br>• Conversation<br>• Question answer<br>• Games | • Information management<br>• Respect for the environment<br>• Respect for diversity<br>• Communication<br>• Active listening<br>• Responsibility<br>• Collaboration<br>• Team work | 4 |
| | Describing location | The book is in the bag.<br>The bird is on the roof. | • Drilling<br>• Asking and answering<br>• Demonstration<br>• Games | | |
| | Identifying colours | The rose is red.<br>The banana is yellow.<br>The lotus is white. | • Demonstration<br>• Picture description<br>• Games<br>• Chants and rhymes<br>• Outdoor observation | | |
| | Asking and answering 'Yes/No' and 'wh questions. | Is this a flower?<br>Yes, it is.<br>What is this?<br>This is a bird.<br>Where do you live?<br>I live in Chitwan. | • Conversation<br>• Question answer<br>• Role play<br>• Games<br>• Chants and rhymes | | |
| 6. My belongings | Describing possessions | This is my book.<br>That is your pen.<br>It is his/her house.<br>My uncle has a bicycle. | • Chants and rhymes<br>• Pair work and group work<br>• Pictures/realia based activities<br>• Games<br>• Ordering preferences<br>• Question answer | • Integrity/honesty<br>• Collaboration<br>• Taking care of one's belongings<br>• Active listening | 4 |
| 7. Our culture | Asking and answering about age | How old are you?<br>How old is Sita?<br>I'm six. She's seven. | • Guessing games<br>• Acting/role play<br>• Picture description<br>• Conversation<br>• Interview | • Tolerance<br>• National identity<br>• Democratic participation<br>• Respect for diversity<br>• Communication<br>• Building rapport with others<br>• Intercultural skills | 2 |
| | Understanding and using numbers (one to twenty) | It's my sixth birthday.<br>There are fifteen days in Dashain. | • Matching<br>• Games<br>• Counting objects<br>• Role play<br>• Group work/pair work | | |

| | | | | | |
|---|---|---|---|---|---|
| 8. Communication Technology and Market | Talking about jobs | He is a pilot.<br>She is a doctor.<br>He is a shopkeeper.<br>He is a nurse. | • Matching<br>• Question answer<br>• Role play | • Communication<br>• Self-esteem<br>• Respecting<br>• Building rapport with others<br>• Multi-literacy skills | 3 |
| 9. Fruits and vegetables | Giving information | This is an apple.<br>That is a bag.<br>It is a book.<br>She is a student. | • Role play<br>• Conversation<br>• Chants and rhymes<br>• Describing real objects | • Communication<br>• Information management<br>• Problem solving | 3 |
| 10. Hobbies and interests | Expressing likes and dislikes | I like fruits.<br>I like dancing.<br>I like to read books.<br>I like milk.<br>I don't like singing. | • Drilling<br>• Drawing pictures<br>• Games<br>• Matching<br>• Question answer<br>• Role play | • Creativity<br>• Creative thinking<br>• Self-esteem<br>• Communication<br>• Active listening | 2 |
| 11. Birds and animals | Describing birds and animals | This is a big elephant.<br>The elephant has a big body.<br>The bird is flying.<br>Rama has black eyes.<br>Mina is tall.<br>Crow is a black bird. | ▪ Describing<br>▪ Mimicry<br>▪ Games<br>▪ Information gap tasks | • Respect for the environment<br>• Communication<br>• Critical thinking | 6 |
| **Assessment, revision and remedial teaching. (This should be done in all the themes.)** | | | | | 20 |
| **Total** | | | | | 128 |

**Table 12: Grade-wise Scope and sequence of the contents in English for grade two**

| Theme | Language functions | Exponents/structures | Activities | Soft skills | Time (in hours) |
|---|---|---|---|---|---|
| 1. Me and my family | Greeting and leave taking | Good morning /afternoon (name/children)<br>Hello, how are you?<br>I'm fine. Thank you.<br>Bye/See you | • Drills<br>• Chants, rhymes, and action songs<br>• Role play<br>• Conversation<br>• Games | • Taking care of oneself<br>• Self-discipline<br>• Self-awareness<br>• Communication<br>• Collaboration<br>• Self-discipline<br>• Sociability<br>• Decision making<br>• Honesty/integrity<br>• Self esteem<br>• Sense of belonging | 20 |
| | Introducing others | She is Rita.<br>This is my friend, Ramesh.<br>This is my father. | • Drills<br>• Chants, rhymes, and action songs<br>• Role play<br>• Conversation<br>• Language games | | |
| | Talking about age | How old is your father? He's thirty-five. How old are you? I'm seven years old. | • Question and answer<br>• Conversation<br>• Interview<br>• Games | | |
| | Talking about home and family | I've a big family.<br>How many members are there in your family?<br>There are eight members in my family. | • Describing family tree<br>• Group work<br>• Conversation<br>• Drawing a family tree<br>• Games<br>• Project work (e.g. making a family profile) | | |
| 2. My daily life | Talking about daily habits and activities | I get up at six o'clock everyday. I walk to school with my sister. I play with my friends after school. Our school starts at 10 o'clock. | • Time table-based activities<br>• Completing an activity grid<br>• Conversation<br>• Matching | • Managing daily life<br>• Time management<br>• Making action plans<br>• Team work | 15 |

| | | | • Making time table | • Communication<br>• Self-awareness<br>• Self-motivation | |
|---|---|---|---|---|---|
| | Telling the time | It is 7 o'clock.<br>It is half past two.<br>It is 10:30. | • Demonstration<br>• Conversation<br>• Acting<br>• Card games<br>• Drawing | | |
| | Describing past actions and events | Bishnu bought a doll yesterday. She went to the park this morning. What did you do yesterday/last night/this morning? I went to the park yesterday.<br>We had sports day yesterday. | • Telling stories<br>• Question-answer<br>• Sequencing and describing pictures<br>• Drills<br>• Games | | |
| 3. My school | Talking about now | What are you doing now?<br>I'm doing my homework.<br>What is she doing?<br>She is drawing a picture. | • Conversation<br>• Question and answer<br>• Games<br>• Listening and drawing | • Application<br>• Decision making<br>• Respect for others<br>• Communication<br>• Collaboration<br>• Reading maps | 15 |
| | Giving and responding to commands and instructions | Don't run. Open your book. Fold the paper. Don't open the window | • Games<br>• Role play | | |
| | Describing location | The book is on the table.<br>The pen is in the box.<br>The box is under the table.<br>Sima is sitting between Mina and Nim. | • Describing pictures<br>• Games<br>• Drawing a picture<br>• Spot the difference | | |
| 4. Our environment | Talking about weather | How is the weather today?<br>It's Sunny.<br>It's cloudy.<br>It's rainy.<br>It's windy.<br>It's very cold.<br>It's snowy. | • Role play<br>• Describing pictures<br>• Matching pictures<br>• Question and answer | • Communication<br>• Collaboration<br>• Creativity<br>• Respect for diversity<br>• Respect for the environment | 20 |
| | Describing people and places | The man is tall.<br>The woman is fat.<br>She is slim.<br>My village is plain. | • Describing pictures<br>• Matching pictures<br>• Question and answer | | |
| | Describing picture | There are six birds. There's a tiger lying under the tree. It is raining outside. The birds are flying. | • Picture description<br>• Games<br>• Acting | | |
| | Understanding and using numbers (twenty one-fifty) | How many birds are there?<br>There are twenty-two birds.<br>There are fifty people. | • Picture description<br>• Games<br>• Outdoor visit | | |
| 5. My belongings | Asking for and giving information about immediate possession | What is he wearing? A blue shirt. What is he carrying?<br>He is carrying a stick.<br>She has a big ring. | • Picture description<br>• Information gap tasks<br>• Role play<br>• Question-answer<br>• Conversation<br>• Games | • Information management<br>• Communication<br>• Collaboration<br>• Consumer skills | 5 |
| 6. Our culture | Talking about months of the year | January is the first month of the year.<br>May comes after April.<br>There are 12 months in a year. | • Calendar-based activities<br>• Games<br>• Chants and rhymes<br>• Question and answer | • Time management<br>• Making action plans<br>• Communication | 10 |
| | Talking about jobs | He is a farmer. He grows vegetables.<br>She is a nurse. She works in hospital. | • Question and answer<br>• Role play<br>• Field visit | | |

| | | He is a priest.<br>She is a nun.<br>He is a monk. | | | |
|---|---|---|---|---|---|
| 7. Communication technology and market | Asking for and giving information | What's this?<br>It's a camera.<br>Where do you buy clothes?<br>I buy them from the market. | • Question and answer<br>• Role play<br>• Chants and rhymes | • Communication<br>• Time management | 5 |
| 8. Fruits and vegetables | Describing objects | The orange is yellow.<br>The tomato is green<br>The apple is red.<br>The pumpkin is round.<br>The gourd is long. | • Games<br>• Drills<br>• Matching<br>• Describing pictures<br>• Drawing and colouring<br>• Word puzzle<br>• Spot the difference | • Creativity<br>• Organizational skills | 5 |
| 9. Hobbies and interests | Expressing likes and dislikes | I like dancing.<br>I don't like singing.<br>I like to cook food.<br>I enjoy drawing pictures. | • Drawing<br>• Realia-based activities<br>• Making a list<br>• Games<br>• Question answer | • Honesty/integrity<br>• Self-respect/self-esteem | 5 |
| 10. Birds and animals | Retelling stories | Once there lived a fox. It lived in a jungle. It was very clever. One day it ... | • Telling stories with picture<br>• Ordering pictures and making stories<br>• Strip story<br>Story telling | • Active listening<br>• Communication<br>• Critical thinking | 10 |
| | Expressing ability | The birds can fly.<br>The tigers can't fly.<br>The cows can't climb a tree.<br>The monkeys can jump. | • Acting/Role play<br>• Question and answer<br>• Songs and rhymes<br>• Picture description | | |
| **Assessment, revision and remedial teaching. (This should be done in all the themes.)** | | | | | 18 |
| **Total** | | | | | 128 |

**Table 13: Scope and sequence of the contents for grade three**

| Theme | Language functions | Exponents/structures | Activities | Soft skills | Time (in hours) |
|---|---|---|---|---|---|
| 1. Me and my family | Greeting and leave taking | Good morning/afternoon/evening.<br>Hi! everyone.<br>Good morning to all.<br>See you.<br>Good night.<br>Have a sound sleep.<br>How are you? | • Role play<br>• Conversation<br>• Drilling<br>• Question answer | • Empathy<br>• Awareness<br>• Active listening | 15 |
| | Talking about occupations | What does your father do?<br>What's your mother?<br>My mother is a teacher.<br>My brother is a farmer. | • Role play<br>• Making a job chart<br>• Question answer | | |
| | Talking about home and family | I have a small family.<br>How many members do you have in your family?<br>There are four members in my family.<br>My family is a joint family. | • Role play<br>• Question and answer<br>• Describing pictures<br>• Drawing and describing a family chart | | |
| 2. My daily life | Talking about future | I will go to Pokhara tomorrow.<br>I will get up early tomorrow.<br>He will come this evening. | • Describing time tables<br>• Question and answer | • Active listening<br>• Collaboration | 15 |

|  |  | I will brush my teeth at 6 am. | • Drill<br>• Conversation | • Communication |  |
|---|---|---|---|---|---|
|  | Apologizing | I'm sorry.<br>Sorry.<br>Excuse me! | • Role play<br>• Conversation<br>• Drilling |  |  |
|  | Telling the time | It's quarter past three.<br>It's quarter to ten.<br>It's ten to five. | • Demonstration<br>• Question answer<br>• Drawing clock |  |  |
| 3. My school | Asking for and giving permission | May I come in, teacher? Can I sit down/have crayon/clean the board? Yes, of course. No, I'm sorry. You can't. | • Role play<br>• Question answer<br>• Conversation<br>• Drill | • Flexibility and adaptability<br>• Responsibility<br>• Decision making skill<br>• Taking initiatives | 15 |
|  | Interrupting or getting attention | Excuse me. Can I help you?<br>Excuse me please! Yes.<br>Hello! | • Role play<br>• Conversation<br>• Drill |  |  |
|  | Congratulating and praising | Very good!<br>Well done!<br>Congratulations! | • Role play<br>• Conversation<br>• Drill |  |  |
| 4. Our environment | Describing people and places | He is a tall man.<br>She is beautiful.<br>He is taller than me.<br>The place is beautiful.<br>Kathmandu is a big city. | • Question answer<br>• Role play<br>• Outdoor activities<br>• Describing pictures/realia | • Communication<br>• Collaboration<br>• Creativity<br>• Respect for diversity<br>• Respect for the environment | 15 |
|  | Talking about seasons | The winter is cold.<br>The summer is hot.<br>It rains in the monsoon.<br>It's a rainy season.<br>It snows in the winter. | • Describing weather chart<br>• Question answer<br>• Describing pictures |  |  |
|  | Giving directions | Turn left.<br>Turn right.<br>Go ahead.<br>Cross the road.<br>Go East/ west /north / south. | • Map reading/following a route<br>• Role play<br>• Conversation<br>• Listening and marking on simple map |  |  |
| 5. My belongings | Describing objects | This is my pencil. I write with it.<br>That is your book. It's old. | • Describing pictures<br>• Question answer<br>• Role play | • Information management<br>• Communication<br>• Collaboration | 11 |
|  | Understanding and using numbers (fifty one to hundred) | I have fifty one balloons.<br>We have eighty hens.<br>I have a ball of thread. The thread is one hundred metres long. | • Role play<br>• Question answer<br>• Describing number charts. |  |  |
| 6. Our culture | Narrating past events | We had a party last night. We went for a picnic last month. | • Question answer<br>• Story telling<br>• Strip story<br>• Picture story<br>• Chain story | • Map reading<br>• Self-awareness | 11 |
|  | Asking and answering about past | What did you do during the holiday?<br>I went home to celebrate Tihar.<br>What did people do in the last Lhosar?<br>They sang and danced. | • Question answer<br>• Describing pictures<br>• Role play<br>• Story telling |  |  |
| 7. Communication technology and market | Using the telephone | Hello! Who is speaking?<br>Hi. Can I talk to Ramesh?<br>Hello! Can I take your message?<br>Bye!<br>Thank you! | • Question answer<br>• Role play<br>• Simulation | • Ethical use of ICTs<br>• Operating basic electronic devices<br>• Communication | 10 |
|  | Asking and answering with a choice | Do you like milk or tea?<br>Do you buy shorts or pants?<br>Do you want to go to the | • Question answer<br>• Role play |  |  |

| | | cinema or to the park?<br>I like milk.<br>I buy pants.<br>I want to go to the park. | • Describing pictures | | |
|---|---|---|---|---|---|
| 8. Fruits and vegetables | Describing pictures | The orange is yellow.<br>The apple is sweet.<br>The mango is sour.<br>The bitter gourd is bitter.<br>The banana is big.<br>It's juicy. | • Question answer<br>• Describing pictures<br>• Picture discussion<br>• Describing real objects | • Creativity<br>• Organizational skills<br>• Communicatio n | 6 |
| 9. Hobbies and interests | Expressing likes and dislikes | I enjoy dancing.<br>I love music.<br>I hate crowd.<br>I prefer tea to milk.<br>I like to dance.<br>I don't like singing. | • Question answer<br>• Role play<br>• Describing pictures<br>• Doing a survey | • Honesty and integrity<br>• Collaboration and team work | 6 |
| 10. Birds and animals | Expressing ability | Can you swim? Yes, I can. No, I can't. Fish can swim, but cats can't. | • Actions<br>• Drills<br>• Question answer<br>• Language game | • Independent learning | 6 |
| **Assessment, revision and remedial teaching. (This should be done in all the themes.)** | | | | | **18** |
| **Total** | | | | | **128** |

## १०.४ हाम्रो सेरोफेरो

(क) परिचय

विद्यार्थीहरू आफ्नो वरिपरिको सामाजिक, भौतिक, सांस्कृतिकलगायतका अवस्थासँग परिचित भएमा सिकाइलाई दैनिक जीवनसापेक्ष बनाउन सहज हुन्छ । सिकाइलाई विद्यार्थीको दैनिक जीवन र समाजसँग जोड्न सकेमा सिकारुलाई आफ्ना सामाजिक र भौतिक वातावरणसँग अन्तरक्रिया गरी वातावरणअनुकूल आफूलाई समायोजित हुन सहज हुन्छ । विगतका अनुभवबाट सिक्न, वर्तमान अवसरको खोजमा संलग्न हुन र भविष्यप्रति सचेत रहन एवम् आफू र आफू रहेको वातावरणको सरसफाइ, संरक्षण र संवर्धनमा सरिक भई शारीरिक सबलताका लागि स्वच्छ र तन्दुरुस्त रहने जीवनशैली अवलम्बन गरी, सिर्जना र कलाको माध्यमबाट सकारात्मक र असल एवम् समाजोपयोगी नागरिकका रूपमा तयार रहन सहयोग पुगोस् भनी हाम्रो सेरोफेरो विषयक्षेत्रको पाठ्यक्रम विकास गरिएको छ । आधारभूत तह (कक्षा १-३) को हाम्रो सेरोफेरो विषयक्षेत्रको पाठ्यक्रममा बालबालिकालाई सामाजिक र भौतिक वातावरणप्रति रुचि जगाउने, आफू वरपर रहेको वातावरणको पहिचान गर्ने, वैज्ञानिक सोच गर्ने, सरसफाइ र संरक्षण एवम् स्वास्थ्यप्रति सचेत हुने, कला र सङ्गीतप्रति रुचि जगाई सिर्जनात्मक प्रतिभाको विकासमा सहयोग गर्ने विषयवस्तुको समावेश गरी उत्पादनशील र सक्रिय नागरिकको जग बसाउने उद्देश्य लिइएको छ । यस पाठ्यक्रमले सहभागितात्मक तथा क्रियाकलापमुखी शिक्षण सिकाइलाई जोड दिँदै विद्यार्थीहरूलाई सिर्जनशील तथा खोजउन्मुख बनाई दैनिक समस्या समाधानका सिप विकासमा सहयोग गर्ने लक्ष्य लिएको छ ।

राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०७६ को संरचनाअनुसार आधारभूत तह (कक्षा १-३) मा हाम्रो सेरोफेरो विषयको पाठ्यक्रम तर्जुमा गरिएको छ । यो तह पूरा गर्ने बालबालिकाहरूले आफ्ना दैनिक जीवनमा आइपर्ने कार्य सम्पादन गर्न, समस्याहरूको समाधान गर्न र सामाजिक तथा व्यावहारिक भूमिका निर्वाह गर्न एवम् वातावरण, स्वास्थ्य र तन्दुरुस्तीप्रति सचेत हुनुका साथै आफ्ना सिर्जना र कला बुझेर सोअनुरूप अघि बढ्ने अवसर प्राप्त गर्न सक्ने छन् । यी विषयवस्तुका अध्ययनले माथिल्ला कक्षामा अध्ययनका लागि आधारसमेत प्रदान गर्ने छ । यस विषयक्षेत्रको पाठ्यक्रममा मूलत: सामाजिक अध्ययन, चारित्रिक विकास, विज्ञान तथा वातावरण, स्वास्थ्य तथा शारीरिक र सिर्जनात्मक कला जस्ता सिकाइका क्षेत्रहरूका विषयवस्तुलाई एकीकृत गरिएको छ । विज्ञान तथा वातावरण, सामाजिक अध्ययन, स्वास्थ्य तथा शारीरिक शिक्षा र सिर्जनात्मक कलासम्बन्धी विषयवस्तुलाई एकीकृत स्वरूपमा विभिन्न विषयक्षेत्रहरूमा सङ्गठित गर्नुको मुख्य उद्देश्य विषयवस्तुलाई अन्तरसम्बन्धित गरी सिकाइलाई विद्यार्थीको दैनिक जीवनसँग सम्बन्धित गरेर सिकाइको सान्दर्भिकता वृद्धि गर्नु हो । जीवनका दैनिक आवश्यकताहरू पूरा गर्न र परिवर्तित सामाजिक वातावरणअनुकूल असल नागरिकका रूपमा जीवनयापन गर्न बालबालिकाहरू सामाजिक र भौतिक वातावरणसँग परिचित भई विगतका अनुभवबाट सिक्न, वर्तमान अवसरको खोजमा संलग्न हुन र भविष्यप्रति सचेत रहन समाजको अध्ययन गर्नु आवश्यक भएकाले यी पक्षहरू रहने गरी सामाजिक अध्ययनका विषयवस्तु छनोट गरिएको छ ।

यी कक्षामा सामाजिक शिक्षाअन्तर्गतका आफू र आफ्नो परिवार तथा छरछिमेक, हाम्रो परम्परा, सामाजिक मूल्य र मान्यता, सामाजिक समस्या र समाधान, नागरिक चेतना, हाम्रो पृथ्वी, हाम्रो विगत र हाम्रो आर्थिक क्रियाकलाप गरी सात विषयक्षेत्रमा विषयवस्तु समावेश गरिएको छ । हाम्रो सेरोफेरोको अध्ययनले बालबालिकालाई आफूले आफैँलाई चिन्ने र परिवार र छरछिमेकहरूमा घुलमिल गराउने, संस्कृति तथा परम्परादेखि स्थापित सामाजिक चालचलन, नियम आदिसँग परिचित गराउने, समाजमा विद्यमान विभिन्न समस्या र विकृतिहरू हटाउनका लागि सहयोगी बनाउने, असल नागरिकमा हुनुपर्ने मानवीय गुण, अधिकार र कर्तव्यको पहिचान गरी सामाजिकीकरणमा जोड दिने, बालबालिकाहरूलाई आफू रहेको ठाउँ, क्षेत्र, देश आदिको भौगोलिक स्वरूपप्रति परिचित गराउने, आफू र आफ्नो परिवार, समुदायका विगतका सम्बन्धमा खोजिनिती गर्न प्रेरित गर्ने र उनीहरूलाई मितव्ययी भई परिवार तथा स्थानीय समुदायका आर्थिक क्रियाकलापका बारेमा जानकारी लिन प्रेरित गर्ने अपेक्षा गरिएको छ । व्यक्ति, समाज र राष्ट्रका लागि असल र दक्ष नागरिक तयार गर्न बालबालिकाहरूमा सानै उमेरदेखि विज्ञान तथा प्रविधि र वातावरणसँग परिचित गराई उनीहरूमा वैज्ञानिक सोच, चिन्तन र अभिवृत्तिप्रति सकारात्मक भावनाको विकास गर्न विद्यालय शिक्षाको प्रारम्भिक कक्षादेखि नै विज्ञान तथा वातावरणका विषयवस्तु समावेश गरिएको छ । यसमा वैज्ञानिक सिकाइ, सजीवहरू, वातावरण, पदार्थ र शक्ति, पृथ्वी र अन्तरिक्ष समावेश गरिएको छ । बालबालिकाहरूमा रहेका अन्तर्निहित प्रतिभा, अनुभव, सिर्जना जस्ता पक्षलाई दृश्यकला र सङ्गीतकलाको माध्यमबाट अभिव्यक्त गरिने सिपलाई सिर्जनात्मक कला भनिन्छ । यस विषयको माध्यमबाट बालबालिकाहरूले आफ्नो अनुभूति, अनुभव, सिर्जनालाई स्वतन्त्र र मौलिक रूपले अभिव्यक्त गर्न सक्ने बनाउनु यस विषयको मूल उद्देश्य रहेको छ । सिर्जनात्मक कलाअन्तर्गत दृश्यकला (चित्रकला तथा हस्तकला) तथा सङ्गीत कला समावेश गरिएको छ । स्वास्थ्य शिक्षाले व्यक्तिमा स्वास्थ्यसम्बन्धी ज्ञान, धारणा र सिपको विकास गरी व्यवहारमा सकारात्मक परिवर्तन ल्याउन महत्त्वपूर्ण योगदान दिन्छ । त्यसैले विद्यालय शिक्षाको आधारभूत तहको प्रारम्भदेखि नै स्वास्थ्य शिक्षालाई अनिवार्य विषयका रूपमा समावेश गरिएको छ । आधारभूत तहको कक्षा १-३ मा स्वस्थ जीवनशैली, वातावरणीय सफाइ, पोषण तथा स्वास्थ्य, रोगहरू, सुरक्षा तथा प्राथमिक उपचार, स्वास्थ्य सेवा र धूमपान तथा लागु पदार्थ क्षेत्रहरू समावेश गरिएका छन् । व्यक्तिको शारीरिक, मानसिक, सामाजिक र संवेगात्मक पक्षको विकास अर्थात् सर्वाङ्गीण विकासमा सहयोग पुर्‍याउने उद्देश्यले शारीरिक शिक्षाअन्तर्गतका विभिन्न शारीरिक क्रियाकलाप तथा खेलकुद समावेश गरिएको छ ।

विज्ञान तथा वातावरण, सामाजिक अध्ययन, स्वास्थ्य तथा शारीरिक शिक्षा र सिर्जनात्मक कला विषयहरूलाई अन्तरविषयक ढाँचा (Interdisciplinary model) मा एकीकृत गरी यसलाई हाम्रो सेरोफेरो विषयक्षेत्र भनिएको छ । यस ढाँचामा एकीकृत गर्दा केही विषयक्षेत्र सबै विषयमा अन्तरसम्बन्धित हुने, केही दुई वा दुईभन्दा बढी विषयमा अन्तरसम्बन्धित हुने र केही कुनै एक विषयसँग मात्र अन्तरसम्बन्धित हुने गरी विषयक्षेत्रहरू (Themes) व्यवस्थित गरिएका छन् । जम्मा १० विषयक्षेत्र वा क्षेत्रमा सङ्गठित गरिएका हाम्रो सेरोफरो विषयक्षेत्रको पाठ्यक्रममा समावेश विज्ञान तथा वातावरण, सामाजिक अध्ययन, स्वास्थ्य तथा शारीरिक शिक्षा र सिर्जनात्मक कला विषयहरूका विषयगत सिकाइक्षेत्र र सिकाइ उपब्धिहरूलाई अन्तरविषयक ढाँचामा एकीकृत गरिएको छ । यस विषयक्षेत्रको सिकाइ सहजीकरणमा स्थानीय परिवेश र सन्दर्भलाई समेटेर यस विषयक्षेत्रअन्तर्गत राखिएका विषयवस्तुलाई अन्तरसम्बन्धित गर्नु आवश्यक छ । यो विषयको पठनपाठनका लागि कक्षा १, २ र ३ प्रत्येकमा पाठ्यभार ८ र वार्षिक कार्यघण्टा २५६ छुट्याइएको छ ।

### (ख) तहगत सक्षमता

कक्षा १-३ सम्मको हाम्रो सेरोफेरो विषयको अध्ययनपश्चात् विद्यार्थीहरूले निम्नलिखित सक्षमता हासिल गर्ने छन् :

१. आफू, आफ्नो परिवारको परिचय तथा परिवार र छिमेकीको काममा सहयोग
२. खानेकुरा र सामानको जतन र उपयोग
३. मेलमिलाप, सहयोग, समन्वय, सहभागिता जस्ता सामाजिक सिपको विकास
४. विद्यालयमा हुने क्रियाकलापमा सहभागिता र दुर्घटना एवम् प्रकोपप्रति सचेतता र सावधानी
५. हाम्रा सामाजिक, सांस्कृतिक गतिविधिहरूको पहिचान, सम्मान र सहभागिता
६. सूचना तथा सञ्चार र यातायातका साधनको सामान्य चिनारी र उपयोग
७. पृथ्वी र आफ्नो वरपरको भौगोलिक स्वरूपको जानकारी र नक्साङ्कन
८. आफ्नो समुदायमा भएका सार्वजनिक सम्पत्ति र प्राकृतिक सम्पदाको संरक्षण र प्रयोग
९. आफ्नो अधिकार र कर्तव्यप्रति सचेतना र सामाजिक शिष्टाचार तथा नियमहरूको पालना
१०. कामको सम्मान तथा मितव्ययिता कायम र सामान्य आर्थिक क्रियाकलापको महत्त्वबोध
११. शारीरिक एवम् मानसिक सिप विकाससँग सम्बन्धित स्थानीय तथा अन्य खेलहरूको अभ्यास र खेल सामग्रीको उचित प्रयोग
१२. आधारभूत शारीरिक क्रियाकलाप र योगमा सहभागिता र अभ्यास तथा स्वस्थकर र सुरक्षित बानी विकास
१३. दैनिक जीवनमा शक्तिका स्रोत, हावा, पानी आदिको विशेषता पहिचान र उपयोग
१४. वरपरका वस्तु, घटना तथा मौसमप्रति सचेतता
१५. वातावरणीय सरसफाइ, रोग र स्वास्थ्यप्रति सचेतता
१६. सङ्गीत तथा दृश्यकलामार्फत सिर्जनात्मक प्रस्तुति र सम्मान
१७. बिरुवा र जनावरहरूको लक्षण पहिचान, वर्गीकरण, संरक्षण र यिनीहरूको वातावरणसँग अन्तरसम्बन्धको बोध
१८. वैज्ञानिक सिकाइ र विज्ञानका प्रक्रियागत सिप तथा व्यवहारकुशल सिप विकास
१९. कागज र माटाको प्रयोगवाट वस्तुको नमुना निर्माण तथा स्थानीय वस्तुबाट छपाइ

### (ग) कक्षागत सिकाइ उपलब्धि

**तालिका १४ : हाम्रो सेरोफेरो विषयक्षेत्रका कक्षागत सिकाइ उपलब्धि**

| कक्षा १ | कक्षा २ | कक्षा ३ |
|---|---|---|
| १. आफू र आफ्नो परिवारको परिचय दिन<br>२. समूहगत रुपमा बालगीतमा लय मिलाइ खुट्टा र शरीर चलाउन तथा रेखाहरू कोर्न<br>३. सफा र ताजा खानेकुरा खाने बानी बसाल्न<br>४. खेलौनाको प्रयोग गरिने खेलहरु, स्थानीय खेलहरु तथा कथामा आधारित खेलहरु खेल्न<br>५. घरायसी सामानको जतनकासाथ उपयोग गर्न<br>६. आधारभूत शारीरिक क्रियाकलाप र योगको अभ्यास गर्न<br>७. स्वस्थकर र सुरक्षित बानी बसाल्न<br>८. ताल मिलाएर हिड्न र औंला वा छेस्काले कागजमा स्वतन्त्र रूपले चित्र बनाउन<br>९. दैनिक जीवनमा प्रयोग हुने शक्तिका स्रोत पहिचान गर्न<br>१०. सहयोगात्मक भावनाको विकास गर्न<br>११. आफ्नो स्वास्थ्यप्रति सचेत हुन<br>१२. आफ्ना वरपरका जनावरहरुको खाना, बच्चा पहिचान गर्न र तिनीहरुको हेरचाहमा सहयोग गर्न<br>१३. आफ्नो विद्यालयको परिचय दिन र विद्यालयमा गरिने क्रियाकलापहरुमा सहभागी हुन<br>१४. शारीरिक क्रियाकलापहरुमा सहभागी हुन<br>१५. घर, विद्यालय र समुदायमा घट्ने दुर्घटना र प्रकोपप्रति सचेत रहन<br>१६. सजिव र निर्जिव वस्तुका लक्षणहरु पहिचान गरी वर्गीकरण गर्न<br>१७. वरपरका विरुवाहरु पहिचान गरी वर्गीकरण गर्न<br>१८. वरपरको वातावरण सरसफाइ गर्न र व्यवहारमा प्रदर्शन गर्न<br>१९. वरपरका वस्तु तथा घटनाको पहिचान गर्न<br>२०. गायनद्वारा सिर्जनशीलता प्रस्तुत गर्न<br>२१. वादन र नृत्यद्वारा सिर्जनशीलता प्रस्तुत गर्न<br>२२. चित्र कोरी रङ भर्न, छपाइ गर्न र माटो तथा पिठोबाट नमुना निर्माण गर्न | १. आफ्नो परिवारका सदस्य र साथीको परिचय दिन<br>२. आफ्नो परिवार र छिमेकप्रति सकारात्मक व्यवहार प्रदर्शन गर्न<br>३. सफा र ताजा खानेकुरा खाने बानी बसाल्न<br>४. खेलौनाको प्रयोग गरी वा नगरी खेल खेल्ने अभ्यास गर्न<br>५. सिकाइ र सरसफाइका लागि सरसामानहरु प्रयोग गर्न<br>६. हाउभाउ सहित नृत्य गर्न र ज्यामितीय आकृतिहरू बनाउन<br>७. आधारभुत शारीरिक क्रियाकलाप र योगको अभ्यास गर्न<br>८. स्वस्थकर र सुरक्षित बानी बसाल्न<br>९. दैनिक जीवनमा विद्युत र चुम्बक शक्तिको परिचय दिन<br>१०. दैनिक जीवनमा ध्वनि, ताप र प्रकाश शक्तिका स्रोतहरुको परिचय दिन<br>११. सङ्गीतको तालमा शरीर घुमाउन र रङहरू मिश्रण गर्न<br>१२. सहयोग र सम्मानको व्यवहार प्रदर्शन गर्न<br>१३. साधारण खेलहरु खेल्न<br>१४. स्वस्थ्यप्रति सचेत भई व्यवहारमा अवलम्बन गर्न<br>१५. जनावरको वर्गिकरण गर्न र खानाकोलागि जीवहरुबिचको अन्तरनिर्भरताका उदाहरण दिन<br>१६. आकृति छाप्न र पशुपंक्षीका क्रियाकलापको नक्कल गर्न<br>१७. विद्यालयको सरसफाई र बगैचा निर्माणमा सहयोग गर्न<br>१८. विद्यालयमा हुने शारीरिक कसरत, कवाज र खेल सम्वन्धी सिप विकास गर्न<br>१९. घर, विद्यालय र समुदायमा घट्ने दुर्घटना र प्रकोपप्रति सचेत रहन | १. आफू बसेको वडाको परिचय दिई समुदायको कामका सहयोग र सम्मान गर्न<br>२. नातेदार र पाहुनाको सत्कार गर्न तथा परिवारको काममा सहयोग गर्न<br>३. सफा र ताजा खानेकुरा खाने बानी बसाल्न र विभिन्न खेल खेल्ने अभ्यास गर्न<br>४. हिड्ने, नाघ्ने, हप गर्ने र लख्ट्ने खेल खेल्न<br>५. फ्याँक्ने र उभिने तथा अभिनय र कथामा आधारित खेल खेल्न<br>६. सिकाइकालागि सरसामानहरु प्रयोग गर्न र समूहमा साधारण नृत्य गर्न तथा विभिन्न आकृति बनाउन<br>७. आधारभुत शारीरिक क्रियाकलाप र योगको अभ्यास गर्न<br>८. स्वस्थकर र सुरक्षित बानी बसाल्न<br>९. शक्तिका स्रोतहरुको मितव्ययी उपयोग र संरक्षण गर्न<br>१०. सहयोग र सम्मानको व्यवहार प्रदर्शन गर्न<br>११. बाल अधिकारप्रति सचेत रहन, खेलहरु खेल्न र अभिनय गर्न<br>१२. स्वस्थ्यप्रति सचेत भई व्यवहारमा अवलम्बन गर्न<br>१३. जीवहरुसँगको अन्तरनिर्भरता र तिनीहरुको अनुकुलता सम्बन्धमा सुसूचित हुन<br>१४. विद्यालयमा हुने शारीरिक कसरत, व्यायाम, खेल र सरसफाइ सम्वन्धी सिप प्रदर्शन गर्न<br>१५. कागज टाँसी विभिन्न किसिमका आकृति बनाउन<br>१६. घर, विद्यालय र समुदायमा घट्ने दुर्घटनाप्रति सचेत रहन<br>१७. व्यक्तिगत सुरक्षाका उपायहरु अवलम्बन गर्न र सन्तुलन कार्य गर्न |

| | | |
|---|---|---|
| २३. आफ्ना सांस्कृतिक क्रियाकलापहरुसँग परिचित हुन<br>२४. दैनिक जीवनमा सञ्चारका साधनहरुको पहिचान र होसीयारीपूर्वक प्रयोग गर्न<br>२५. यातायातका साधन र बजारसँग परिचित हुन<br>२६. मौसमको अवस्था तथा वरपरको भौगोलिक स्वरुपसँग परिचित हुन र पानीको उपयोगीता बनाउन<br>२७. कागजबाट नमुना बनाउन र रङसम्बन्धी साधारण प्रयोग गर्न | २०. कागजका विभिन्न आकृति बनाउन<br>२१. जनावर र विरुवाका लक्षणहरु विभिन्न माध्ययवाट प्रदर्शन गर्न<br>२२. विरुवाको वर्गीकरण गर्न र विरुवाका विभिन्न भागहरुको काम बताउन<br>२३. वरपरको वातावरण सरसफाइ सम्बन्धी व्यवहार प्रदर्शन गर्न र उपलब्ध सामग्रीहरुबाट बस्तुको नमुना निर्माण गर्न<br>२४. वरपरका वस्तुका विशेषताहरु तथा घटनाहरुप्रति जिज्ञासु हुन<br>२५. गायनद्वारा सिर्जनशीलता अभ्यास गर्न<br>२६.बादन र नृत्यद्वारा सिर्जनशीलता अभ्यास गर्न<br>२७. नक्सा कोर्न, सामान्य बुट्टा बनाउन, माटाबाट नमुना बस्तु बनाउन र छपाई गर्न<br>२८. आफ्ना सांस्कृतिक क्रियाकलापहरुसँग परिचित भई सहभागी हुन<br>२९. दैनिक जीवनमा सञ्चारका साधनहरुको साबधानीपूर्वक उपयोग गर्न<br>३०. स्थानीय उत्पादनको पहिचान गरी उपयोगमा मितव्ययीता अपनाउन<br>३१. मौसमअनुरुप व्यवहार प्रदर्शन गर्न र वरपरको भौगोलिक स्वरुपको विवरण दिन<br>३२. हावा र पानीका भौतिक गुणहरुसँग परिचित भइ उपयोगीता बताउन<br>३३. कागजबाट विभिन्न आकृतिका वस्तुहरू बनाउन र रङहरूको प्रयोग गरी कागजमा चित्र बनाउन | १८. जनावर र वनस्पतिबीच भिन्नता छुट्याउन र विरुवाका लक्षणहरु पहिचान गरी वर्गीकरण गर्न<br>१९. विरुवाहरु रोप्न, संरक्षण गर्न र खाद्य शृङ्खलाको उदाहरण दिन<br>२०. वरपरका वातावरण सरसफाइ सम्बन्धी व्यवहार प्रदर्शन गर्न<br>२१. वरपरका वस्तुका विशेषताहरु तथा घटनाहरुप्रति जिज्ञासु भइ अवलोकन तथा परीक्षण गर्न<br>२२. गायन, बादन तथा नृत्यसम्बन्धी प्रतिभा प्रस्तुत गर्न<br>२३. वस्तुको नमुना बनाउन, चित्र कोरी रङ भर्न र माटोवाट नमुना निर्माण गर्न<br>२४. आफ्ना सांस्कृतिक क्रियाकलापहरुसँग परिचित भई सहभागी हुन<br>२५. दैनिक जीवनमा संचारका साधनहरुको उचित र साबधानी पूर्वक प्रयोग गर्न<br>२६. स्थानीय उत्पादनको प्रयोग गरी मितव्ययी हुन र बचत गर्ने बानी बसाल्न<br>२७. मौसमको अवस्थाप्रति सचेत भई व्यवहार प्रदर्शन गर्न<br>२८. आफ्नो वडाको भौगोलिक स्वरुप र सामाजिक रहनसहनको अवलोकन गरी अवस्था प्रस्तुत गन<br>२९. माटो पानी र हावाको उपयोग बताउन र प्रदर्शन गर्न<br>३०. कागजबाट नमुना तयार गर्न तथा चित्र कोरी रङ भर्न |

## (घ) विषयवस्तुको क्षेत्र र क्रम

**तालिका १५ : हाम्रो सेरोफेरो विषयक्षेत्रको विषयवस्तुको क्षेत्र र क्रम**

| विषय क्षेत्र | कक्षा १ | कार्य घण्टा | कक्षा २ | कार्य घण्टा | कक्षा ३ | कार्य घण्टा |
|---|---|---|---|---|---|---|
| म र मेरो परिवार | • आफ्नो नाम, ठेगाना र पहिरन तथा परिवारका सदस्यहरूको नाम<br>• परिवारका सदस्यहरूको नाता र उपयुक्त अभिवादन<br>• आफूभन्दा सानालाई माया<br>• आफ्नो परिवारका सदस्यहरूले गर्ने मुख्यमुख्य काम<br>• समूहमा साधारण बालगीतमा लय र खुट्टाको चाल<br>• समूहमा साधारण बालगीतमा लय र शरीर हल्लाउने अभ्यास<br>• पेन्सिल, चक, पेस्टल वा खरी प्रयोग गरी मोटा र मसिना, सिधा र बाँङ्गाटिङ्गा रेखा कोर्ने अभ्यास<br>• आफूले खाने खानेकुराका नाम<br>• स्थानीय स्तरमा पाइने सफा र ताजा खानेकुरा पहिचान<br>• खानेकुरा सफा राख्ने काम<br>• स्थानीय स्तरमा पाइने सफा र ताजा खानेकुरा खाने बानी<br>• आफ्नो खेलौना र खेल<br>• स्थानीय खेल<br>• लाइनमा मिलेर हिँड्न बानी<br>• कथामा आधारित खेलहरू<br>• आफ्नो घरमा भएका सरसमानहरू<br>• सामानहरुको जतन गर्ने र उपयुक्त स्थानमा राख्ने बानी<br>• साधारण उपकरणको अवलोकन गरी आवश्यकताअनुसार मापनका लागि प्रयोग | ४० | • आफ्नो कक्षामा पढ्ने साथीहरूको घर ठेगाना<br>• आफ्नो परिवारका सदस्यहरूले लगाउने पहिरनको नाम<br>• आफू र आफ्नो परिवारका सदस्यहरूको काम (पेसा) र उमेर<br>• छरछिमेकीको आदर, सत्कार<br>• घरपरिवारका सदस्यहरूसँग सहयोग<br>• परिवारका सदस्यहरू बिरामी परेको अवस्थामा स्वास्थ्य सेवा र सहयोग<br>• घर र आफ्नो वरपर पाइने खानेकुराको पहिचान<br>• घर र आफ्नो वरपर पाइने खानेकुराको उपयोग<br>• रैथाने खानेकुराहरु पहिचान गरी सूची<br>• स्थानीय स्तरमा पाइने हरियो सागपात र पहेँला फलफूल खाने बानी<br>• खेलका लागि खेलौना र स्थानीय सामग्रीहरूको प्रयोग<br>• जोडीमा हिँडाई र शरीर तताउने सामान्य कसरत<br>• हपिङ र टेनिक्वट (रबर रिङ) फ्याँकाई<br>• कथामा आधारित खेलहरू<br>• दैनिक प्रयोगका सरसामानहरूको नाम<br>• दैनिक प्रयोगका सरसामानहरूको हिफाजत<br>• व्यक्तिगत सरसफाइमा प्रयोग हुने सामग्रीहरूको पहिचान र प्रयोग<br>• साधारण उपकरणरु, त्यसका | ४० | • आफु बसेको वडाको सामान्य परिचय<br>• समुदायका विभिन्न व्यक्तिहरुले गर्ने श्रमको पहिचान र सम्मान<br>• समुदायको काममा सहयोग<br>• नातेदार र पाहुनाहरूको सत्कार<br>• आफु र परिवारका सदस्यहरूको नाता सम्बन्ध<br>• आफ्ना पारिवारिक पृष्ठभूमि (पुर्खा, पुस्तागत)<br>• परिवारको काममा आफूले सकेको सहयोग<br>• विभिन्न प्रकारका खानेकुराको स्रोत पहिचान<br>• विभिन्न प्रकारका खानेकुराको स्रोत वर्गीकरण र प्रयोग<br>• आफ्नो शारीरिक स्वास्थ्यप्रति सचेतता<br>• साकाहारी र मांसाहारी पौष्टिक खानेकुराको पहिचान र प्रयोग<br>• हात समाइ लखेटेर खेलिने खेलहरु<br>• छोटो दुरी हिँडाइ र ससाना उचाइ नाघाइ<br>• विभिन्न तरिकाले हपिङ<br>• साइड स्किपिङ र घुमेको डोरीमा स्किपिङ<br>• सानो तौलका बलहरू फ्याँकाई<br>• ताँती र पङ्क्तिमा उभिने र सामूहिक रूपमा कदम मिलाएर  हिँड्ने अभ्यास<br>• पाठ्यपुस्तकमा भएका कथावस्तुहरूमा अभिनय<br>• कथाहरूमा आधारित खेलहरू<br>• साधारण उपकरणको आवश्यकताअनुसार मापनका लागि प्रयोग, परीक्षण र निष्कर्ष<br>• आफूले सिकेका गीतहरूलाई ताल र भाव मिलाई समूहमा साधारण नृत्य<br>• गोलो, च्याप्टो, बाटुलो र लाम्चो आकारलाई जोडेर विभिन्न प्रकारका आकृति निर्माण<br>• दैनिक जीवनमा प्रयोग हुने सरसमानको | ४० |

| | | | | | | |
|---|---|---|---|---|---|---|
| | | | मापनका लागि प्रयोग<br>● सिकेका जानेका गीतमा सामान्य नृत्य<br>● सिकेका जानेका गीतमा खुट्टा र हातको चाल मिलाई हाउभाउ सहित नृत्य<br>● ज्यामितीय आकारमा आधारित विभिन्न आकृतिहरू<br>● दैनिक जीवनमा प्रयोग हुने सरसमानको सामान्य रेखाङ्कन | | रेखाङ्कन | |
| मेरो दैनिक जीवन | ● आधारभूत योग अभ्यास (सुखासन, शिशु आसन र सबासन)<br>● शरीरलाई विभिन्न दिशामा तन्काउने र झुकाउने काम<br>● भकुन्डो गुडाउने र समाउने अभ्यास<br>● ठिक तरिकाले हिँड्ने, उभिने, बस्ने, सुत्ने र सिधा रेखामा दौडने अभ्यास<br>● शरीरका बाहिरी अङ्गहरूको पहिचान र सरसफाइ<br>● हात धोएर खाने बानी<br>● चर्पीमा दिसापिसाब गर्ने बानी<br>● सफा र सुरक्षित पानी पिउने बानी<br>● सिधा र बाँगोटिङ्गो रेखामा ताल मिलाएर हिँड्ने अभ्यास<br>● विविध दिशामा ताल मिलाएर शरीर घुमाउने र बटार्ने अभ्यास<br>● आफ्नो वरपर उपलब्ध सामग्रीहरूबाट बनाइएका रङहरू प्रयोग गरी औँला वा छेस्काले कागजमा स्वतन्त्र रूपले चित्र बनाउने अभ्यास<br>● आफ्नो इच्छाअनुसार स्वतन्त्र रूपमा चित्र कोर्ने अभ्यास<br>● दैनिक जीवनमा विद्युत्को उपयोग<br>● घरमा खाना पकाउन प्रयोग गरिने इन्धनको नाम<br>● विभिन्न प्रकारका ध्वनिहरू र तिनीहरूका स्रोत<br>● प्रकाश र यसका मुख्य स्रोत पहिचान | ४५ | ● आधारभूत योग अभ्यास (पुतली आसन, बज्रासन र बृक्षासन)<br>● विविध दिशामा भकुण्डो फाल्ने र समाउने अभ्यास<br>● साधारण लङजम्प<br>● साधारण हाइजम्प<br>● खोक्दा, हाच्छिउँ गर्दा नाकमुख छोप्ने र जथाभावी नथुक्ने बानी<br>● शरीरका विभिन्न अङ्गहरू सफा गर्ने बानी<br>● पिउने पानी सुरक्षित राख्ने तरिका पहिचान र समय समयमा पानी पिउने बानी<br>● ठिक तरिकाले हिँड्ने, उभिने, बस्ने र सुत्ने अभ्यास<br>● विद्युत्का प्रमुख स्रोतहरू पहिचान<br>● विद्युतको घरायसी प्रयोग<br>● चुम्बक र चुम्बकले तान्ने बस्तुहरु<br>● चुम्बकलाई शक्तिका रूपमा पहिचान<br>● विभिन्न प्रकारका ध्वनिहरू पहिचान<br>● वरपरका ध्वनिका स्रोतहरु<br>● दैनिक जीवनमा प्रयोग हुने तापका स्रोतहरु<br>● दैनिक जीवनमा प्रयोग हुने प्रकाशका स्रोतहरू<br>● शिक्षकको निर्देशन सहित सङ्गीतको तालमा विविध दिसामा शरीर घुमाउने र बटार्ने अभ्यास<br>● शिक्षकको निर्देशन विना सङ्गीतको तालमा विविध दिसामा शरीर घुमाउने र बटार्ने अभ्यास<br>● रङहरू पहिचान<br>● रङहरूको मिश्रण | ४० | ● आधारभूत योग अभ्यास (भुजंगासन, पद्मासन, ताडासन, अर्धचन्द्रासन)<br>● भकुन्डो भुईंमा उफार्ने, फाल्ने र समाउने अभ्यास<br>● कुर्कुच्चा र पञ्जाले हिड्ने अभ्यास<br>● ठाडो वस्तुमा चढ्ने, झर्ने र वारमा झुन्डिने अभ्यास<br>● शरीरका अङ्गहरूको सफाई<br>● चर्पी तथा धारा र वरपरको वातावरण सफा राख्ने र पिउने पानी सुरक्षित राख्ने बानी<br>● रोग लाग्नबाट बचावट र स्वस्थकर बानी अवलम्बन<br>● शरीरका लागि आराम, निद्रा र व्यायामको सन्तुलन<br>● दैनिक जीवनमा विद्युत्को उपयोगीता<br>● विद्युत्को प्रयोगमा सावधानी<br>● चुम्बकीय र अचुम्बकीय पदार्थ<br>● ध्वनि प्रदूषण र मानव जीवनमा यसको असर | ४० |
| हाम्रो समुदाय | ● आफ्ना दौँतरीहरू र परिवारमा आपसी मेलमिलाप, सहयोग र सहकार्य<br>● धारा, शौचालय आदिको प्रयोगको क्रममा पालो पर्खिने बानी<br>● घेरामा खेलिने खेल र समूहमा खेलिने खेल<br>● समूहमा काम गरी पात, रुखका बोक्रा, सिक्का, कपडा आदिलाई घोटेर विभिन्न टेक्सचर छपाइ<br>● आफूलाई सन्चो नभएको कुरा परिवार, साथी र शिक्षकलाई बताउने बानी<br>● बिरामी पर्दा उपचार गर्न जाने स्वास्थ्य संस्थाहरू<br>● आफू बिरामीपर्दा परिवार, साथी र शिक्षकको सहयोग<br>● सर्ने रोगहरू<br>● वरपरका जनावरहरू पहिचान र तिनीहरूको खाना<br>● जनावरहरूका बच्चा<br>● जनावरहरूको हेरचाहमा सहयोग | ३८ | ● आफ्नो गाउँटोलमा सामाजिक काम गर्ने व्यक्तिहरूको नाम<br>● छरछिमेकमा आपसी सहयोग<br>● सार्वजनिक स्थल र साधनहरू उपयोग गर्दा पङ्क्तिमा पालो पर्खने र अरूलाई पालो दिने बानी<br>● साधारण लखेटाइ खेल<br>● कुकुर फुक्यो खेल<br>● स्वतन्त्र रुपमा अगाडि र पछाडी पल्टने अभ्यास<br>● स्किपीङ खेल<br>● सर्ने र नसर्ने रोगहरू तथा रोगहरु सर्ने माध्यम<br>● स्वास्थ्य सेवा दिने स्थानीय संस्थाहरूको परिचय<br>● बिरामी हुँदा स्वास्थ्य सेवा लिने बानी<br>● बरामी, अशक्त र असहाय व्यक्तिलाई स्वास्थ्य सेवाका लागि सहयोग<br>● वरपरका जमिन र पानीमा बस्ने जनावरहरू<br>● जनावरलाई घरपालुवा र जङ्गली समुहमा वर्गीकरण | ४० | ● छरछिमेकको काममा सहयोग<br>● आफ्नो वडाका सामाजिक काममा सहभागीता र समाजसेवीहरुको सम्मान<br>● जेष्ठ नागरिक, असहाय तथा अपाङ्गता भएका व्यक्तिहरूलाई सम्मान र सहयोग<br>● घरपरिवार र साथीसाथीमा समझदारी कायम गर्नका लागि आफ्नो भूमिका<br>● बालअधिकारप्रति सचेतना<br>● निश्चित दिशामा भाला (टर्बो ज्याबलिन) फ्याँक्ने अभ्यास<br>● स्थानीय खेलहरुको पहिचान, प्रदर्शन र सामूहिक रूपमा प्रतिस्पर्धा<br>● आफ्ना वरिपरि पाइने पशुपन्छीको हिँडाइ र उफ्राइ र बोलीको नक्कल गर्ने अभ्यास<br>● नसर्ने रोगका सामान्य कारक तत्वहरु<br>● बिरामी हुँदा स्वास्थ्य सेवा लिने र अरूलाई स्वास्थ्यसेवा लिनका लागि उत्प्रेरित गर्ने बानी<br>● खोपको आबश्यकता र महत्त्व<br>● धूमपान र मद्यपानको प्रयोगले परिवार र समुदायमा पर्ने असर तथा धूमपान र मद्यपानवाट टाढा रहने बानी<br>● जमिन र पानीमा बस्ने वरपरका जनावरहरुका | ४० |

| | | | | | | |
|---|---|---|---|---|---|---|
| | ● आफ्नो वरिपरि रहेका पशुपन्छीहरूको क्रियाकलापको अवलोकन र अभिनय | | ● जनावरहरूको खाना र खाना खाने तरिका<br>● जनावरहरु र विरुवाहरुबाट पाउने खानेकुराको नाम<br>● तेल, कार्बन कागज प्रयोग गरेर विभिन्न आकारहरू छाप्ने अभ्यास<br>● आफ्ना वरिपरि पाइने पशुपन्छीको हिँडाइ, उफ्राइ र बोलीको नक्कल | | बाहिरी अङ्गहरू र तिनीहरुका उपयोगीता<br>● वरपरका जनावरहरूको खाना खान सघाउने अङ्गहरू<br>● विभिन्न मौसम र समयमा देखिने जनावरहरू<br>● मानिसले जनावर र बिरुवाहरूबाट पाउने फाइदा (खाना र लुगा) | |
| मेरो विद्यालय | ● आफ्नो विद्यालय, साथी र कक्षा शिक्षकको नाम तथा विद्यालयको ठेगाना<br>● फूलबारीको तथा बोटबिरुवाहरूको हेरचाह<br>● विद्यालयमा भएका सरसामानहरूको नाम<br>● प्राकृतिक वस्तुहरू टाँसेर सरल आकृतिहरूको संयोजन<br>● शिक्षकको निर्देशनअनुसार उचाइ र लामो उफ्रने अभ्यास<br>● शरीर तताउने सामान्य कसरत<br>● पी.टी. तालिका नं. १ देखि ३ सम्मका कसरतहरू ताल मिलाएर गर्ने अभ्यास<br>● विविध दिशामा मुढाझैँ पल्टने अभ्यास<br>● घर विद्यालय, बाटोघाटो र समुदायमा घटेका दुर्घटनाबाट भएको चोटपटक बताउने बानी<br>● घर, विद्यालय र बाटोघाटोमा हुने दुर्घटनाप्रति सचेतता<br>● अपरिचित बेवारिसे वस्तुप्रति सचेतता<br>● वरपर घट्न सक्ने प्रकोपप्रति सजगता | ३८ | ● विद्यालयको कक्षाकोठा सरसफाइ<br>● विद्यालयमा प्रयोग गरिने सामानको पहिचान र जतन<br>● बगैँचाको निर्माणमा सहयोग<br>● सतर्क, गोडाफाट र विश्राम जस्ता कार्यहरू गर्ने तथा लाइनमा अगाडि हिड्ने अभ्यास<br>● पी.टी.तालिका नं. १ देखि ५ सम्मका कसरतहरू<br>● २५ मिटरसम्मको दुरी दौड<br>● एक खुट्टाले टेकी शरीर सन्तुलन गरी उभिने अभ्यास<br>● घाउचोट वा दुर्घटना भएको अवस्थामा प्राथमिक उपचार गर्नुपर्ने भन्ने कुरामा सचेतता<br>● घर तथा विद्यालय र समुदायमा हुन सक्ने दुर्घटनाहरूको कारण र सावधानी<br>● व्यक्तिगत सुरक्षाका उपायहरू<br>● वरपर घट्न सक्ने प्रकोपबाट सुरक्षा<br>● छापिएका चित्रहरूलाई काट्ने अभ्यास<br>● छापिएका चित्रहरूलाई काटेर टाँसी आफूलाई मनपर्ने आकार बनाउने अभ्यास<br>● कागजका टुक्राहरुवाट सामान्य कोलाज<br>● च्यातेका वा काटेका कागजका टुक्राहरूलाई संयोजन गरी नमूना तयारी | ४० | ● विद्यालयको हाताको सरसफाइ कार्यक्रममा सहभागी हुने बानी<br>● विद्यालयमा भएको खेल सामग्री, पुस्तकालय तथा बुक कर्नरमा भएका सामानको जतनसाथ प्रयोग<br>● विद्यालयमा निश्चित समयमा गरिने क्रियाकलापहरू। (जस्तैः अभिभावक दिवस, वार्षिक उत्सव, आदि)<br>● पी.टी.तालिका नं. १ देखि ७ सम्मका ताल मिलाएर कसरतहरू<br>● ५० मिटरसम्म दौड<br>● विभिन्न किसिमका कागजलाई काट्ने अभ्यास<br>● विभिन्न किसिमका कागजलाई निश्चित आकार मिलाएर काट्ने अभ्यास<br>● विभिन्न किसिमका कागजलाई काटेर/च्यातेर टाँसी आफूलाई मन पर्ने आकृति बनाउने अभ्यास<br>● च्यातेका/काटेका कागजका टुक्राहरूलाई एकमाथि अर्को टाँस्दै चित्र संयोजन<br>● प्राथमिक उपचारको अवधारणा<br>● विभिन्न स्थानमा हुन सक्ने दुर्घटनामा प्राथमिक उपचारको सेवा<br>● घर तथा विद्यालय र समुदायमा हुने दुर्घटनाहरूका कारण र बच्ने उपाय<br>● व्यक्तिगत सुरक्षाका उपायहरू<br>● वरपर घट्न सक्ने प्रकोपबाट सुरक्षा<br>● फलेक, बेन्च वा तेर्सो काठमा हिँड्ने अभ्यास<br>● हातले टेकी छेउबाट पल्टने कार्य | ४० |
| हाम्रा वरपरका सजीवहरु | ● सजीव र निर्जिव वस्तुहरु पहिचान<br>● सजीव वस्तुहरुका लक्षणहरु<br>● निर्जिव वस्तुहरुका लक्षणहरु<br>● सजीव र निर्जिव वस्तुमा फरक<br>● वरपरका बिरुवाहरू पहिचान<br>● ठुला, मझौला र साना बिरुवाहरूलाई क्रमशः रुख, बुट्यान र झारपातमा वर्गीकरण<br>● रुख, बुट्यान र झारपात विच भिन्नता<br>● बिरुवाका विभिन्न भागहरू (जरा, डाँठ, पात, फूल र फल) पहिचान | १७ | ● जनावरको चालको तरिका<br>● जनावरका चालको अभिनय<br>● आफ्नो वरपर भएका जनावर र वनस्पतिका सामान्य रेखाङ्कन<br>● जनावर र विरुवाबिच भिन्नता<br>● विरुवाहरुलाई फलफूल, अन्नवाली र तरकारी समूहमा वर्गीकरण<br>● रुख, बुट्यान र झारपात<br>● विभिन्न बिरुवाका भागहरू (जरा, डाँठ, पात, फूल र फल) पहिचान<br>● बिरुवाका विभिन्न भागहरूको काम | १७ | ● आधारभूत लक्ष्यणहरू (चाल, शरीरका भागहरू र खाना प्राप्त गर्ने तरिका) का आधारमा बिरुवा र जनावरबिच भिन्नता<br>● बिरुवाहरूलाई वर्गीकरण ( फुल फुल्ने/फुल नफुल्ने जमिनमा पाइने/पानीमा पाइने, एकवर्षे/बहुवर्षे)<br>● विभिन्न मौसममा पाइने बिरुवाहरू पहिचान<br>● विभिन्न मौसममा पाइने बिरुवाहरूको सूची<br>● बिरुवा रोप्ने बानी<br>● आफुले रोपेको बिरुवाको आवश्यक हेरचाह गर्ने बानी<br>● आफुले रोपेको बिरुवाको समय समयमा आउने परिवर्तनको अवलोकन र अभिलेखीकरण<br>● खाद्य शृङ्खलाको साधारण उदाहरण | १७ |
| हाम्रो वातावरण | ● घरमा आफ्नो कोठा सरसफाइ गर्ने बानी<br>● विद्यालयको कक्षाकोठा सरसफाइ गर्ने बानी<br>● स्वच्छ वातावरणप्रति सचेतता र वरपरको वातावरण सफा राख्न सहयोग<br>● घर तथा विद्यालयमा उत्पन्न हुने फोहोरलाई तोकिएको स्थानमा राख्ने बानी<br>● वरपरका वस्तु तथा घटना सम्बन्धी खोजमूलक साधारण प्रश्नहरू सोध्ने बानी | १८ | ● घर तथा विद्यालय सफा राख्ने कार्यमा सहभागीता<br>● वरपरको वातावरण फोहोर हुने कारणहरू<br>● वरपरको वातावरण सफा राख्ने उपाय र वरपरको वातावरणको सरसफाइ कार्यमा सहभागीता<br>● खेर गएका वा वरपर उपलब्ध सामग्रीहरु प्रयोग गरी विभिन्न नमुना संरचना निर्माण (जस्तै भवन, खेल्ने बस्तु, रोवोट)<br>● आफ्नो गाउँ/टोलका सार्वजनिक सम्पत्तिहरू र तिनीहरुको संरक्षण | २० | ● विद्यालय, घर, छरछिमेक र टोलको सरसफाइमा सहभागीता<br>● आफ्नो वरपरको वातावरण प्रदूषणका कारणहरू पहिचान<br>● वातावरणीय स्वच्छताप्रति सजगता र प्रदूषण रोक्न सहयोग<br>● कुहिने र नकुहिने फोहोरहरुको बर्गीकरण र उचित विसर्जन<br>● आफ्नो समुदायमा भएका प्राकृतिक सम्पदाको संरक्षण र प्रयोग<br>● वरपरका वस्तु तथा घटनाहरू सम्बन्धी खोजमूलक प्रश्न गर्ने, अनुमान गर्ने, अवलोकन गर्ने र तर्क प्रस्तुत गर्ने बानी | २० |

| | | | | | | |
|---|---|---|---|---|---|---|
| | • वरपरको प्राकृतिक र मानवनिर्मित वस्तुहरू पहिचान<br>• आफ्ना वरपरका वस्तुका आकार र साइज<br>• गन्ध, चिसो, तातो, कडा, नरमलगायतका गुणहरूका आधारमा वरपरका वस्तुहरुको पहिचान | | कार्यमा सहयोग<br>• वरपरका वस्तु तथा घटनासम्बन्धी खोजमूलक साधारण प्रश्नहरू सोध्ने बानी<br>• दैनिक जीवनमा हावा, पानी र माटोको उपयोगिता<br>• पारदर्शक र अपारदर्शक, डुब्ने र उत्रने, घुल्ने र नघुल्ने बस्तुहरु | | • ठोस, तरल र ग्यास पदार्थका आधारभूत गुणहरूको अवलोकन र परीक्षण<br>• विभिन्न वस्तुहरुको प्रयोग गरी झुण्डाउन मिल्ने खालका सजावटका सामग्रीहरु निर्माण | |
| मेरो सिर्जना | • सुनेका स्थानीय गीतहरू समूहमा गाउने अभ्यास<br>• सुनेका स्थानीय गीतहरू एक्लै गाउने अभ्यास<br>• समूहमा राष्ट्रियगान गाउने अभ्यास<br>• समूहमा राष्ट्रिय भावनाका गीत गाउने अभ्यास<br>• एकल वा समूहमा ताली बजाउने अभ्यास<br>• बालगीत तथा कक्षागत गीतमा ताली बजाउँदै गाउने अभ्यास<br>• आफूले सिकेका गीतहरू लय, ताल र भाव मिलाई सामूहिक नृत्य गर्ने अभ्यास<br>• स्थानीय बाजाहरूको नाम<br>• आकृतिविहिन छपाइकार्य<br>• माटो, पिठो आदिमा विभिन्न आकृतिका वस्तुले थिचेर आकार प्रकार बनाउने अभ्यास<br>• माटो, पिठोवाट विभिन्न आकृतिका वस्तु बनाउने अभ्यास<br>• विभिन्न बस्तुका आकृतिमा रङ लगाउने अभ्यास | २० | • राष्ट्रिय गान लय मिलाएर गाउने अभ्यास<br>• कक्षागत गीत लय मिलाएर गाउने अभ्यास<br>• पाठ्यपुस्तकमा भएका बालगीतहरू लय मिलाएर गाउने अभ्यास<br>• आफूले जानेका स्थानीय गीतहरू लय मिलाएर गाउने अभ्यास<br>• लयमा ताली बजाउने र स्थानीय गीतमा नृत्य गर्ने अभ्यास<br>• आफूले सिकेका गीतहरू लय, ताल, भाव र चाल मिलाई एकल नृत्य गर्ने अभ्यास<br>• आफूले सिकेका गीतहरू लय, ताल, भाव र चाल मिलाई सामूहिक नृत्य गर्ने अभ्यास<br>• स्थानीय बाजाहरू बजाउने अभ्यास<br>• आफ्नो गाउँ/टोलको सामान्य नक्सा<br>• आकार, स्वरूप र रङहरूबाट सामान्य बुट्टाहरू निर्माण<br>• माटो, पिठो आदिको प्रयोग गरी गोलो चेप्टो, बाटुलो, लाम्चो आदि आकारका बस्तु बनाउने अभ्यास<br>• रिलिफ प्रिन्ट ब्लक (relief print block) को प्रयोग गरी विभिन्न रङहरूमा छपाइ | २० | • राष्ट्रिय गान, कक्षागत गीत, पाठ्यपुस्तकमा भएका बालगीतहरू लय मिलाई गाउने अभ्यास<br>• तालमा ताली बजाउने अभ्यास<br>• स्थानीय गीतमा नृत्य गर्ने अभ्यास<br>• स्थानीय बाजाहरू बजाउने अभ्यास<br>• कागज र सिन्का प्रयोग गरी विभिन्न वस्तुको निर्माण<br>• स्लेब (slab) मा विभिन्न प्रकारका आकृति वा फलफूलका बुट्टा बनाउने, माटोबाट विभिन्न आकारका मोडेलहरु बनाउने र वस्तुमा रङको प्रयोग गर्ने अभ्यास<br>• माटामा रेखा, आकार, टेक्सचर र बुट्टासम्बन्धी विविध प्रयोगहरू<br>• माटाका स्ल्याब (clay slabs) मा माटोलाई बेरेर (coils) बनाइएका बुट्टाहरू तथा ससाना गोलाहरू (pellets) द्वारा अलङ्करण | २० |
| हाम्रो संस्कृति | • परिवारमा मनाइने चाडपर्व र उक्त चाडपर्वमा खाइने खानेकुराहरू<br>• घरमा विभिन्न समयमा गरिने क्रियाकलापहरू (जस्तै : जन्मदिन, कुलपूजा, विवाह, ब्रतवन्ध आदि)<br>• आफ्ना समुदायका संकारहरु (दशै, तिहार, छट, क्रिसमस, इद, विभिन्न जात्रा आदि) को अवस्था झल्कने चित्रमा रङ भर्ने अभ्यास<br>• राष्ट्रिय चिह्नहरूको पहिचान | १२ | • आफ्ना चाडपर्वमा लगाइने पोसाक पहिचान र चाडपर्वहरूमा सहभागीता<br>• परिचित व्यक्तिसँग आबश्यक सहयोग लिने र दिने बानी<br>• आफ्ना समुदायका संस्कारहरु (दशै, तिहार, छट, क्रिसमस, इद, विभिन्न जात्रा आदि) को अवस्था झल्कने सामान्य रेखाङ्कन<br>• राष्ट्रिय चिह्नहरूको परिचय | १२ | • आफ्नो गाउँ टोलमा बोलिने भाषा, पोषाक र चाडपर्व<br>• आफ्नो गाउँ टोल तथा परिवारमा मनाइने चाडपर्वहरुमा सहभागीता र उक्त चाडपर्वमा गरिने मुख्य मुख्य क्रियाकलापहरू<br>• आफ्ना समुदायका संस्कारहरु (दशै, तिहार, छट, क्रिसमस, इद, विभिन्न जात्रा आदि) को अवस्था झल्कने सामान्य रेखाङ्कन गर्ने र रङ भर्ने अभ्यास<br>• राष्ट्रिय चिह्नहरूको महत्व | १२ |
| सञ्चार प्रविधि र बजार | • दैनिक जीवनमा प्रयोग हुने सञ्चारका माध्यमहरूको नाम<br>• परिवारसँग मौखिक सञ्चार<br>• साथीहरूसँग मौखिक सञ्चार<br>• सञ्चारका साधनहरू प्रयोग गर्दा अपनाउनुपर्ने सुरक्षाका उपायहरूप्रति सचेतता<br>• यातायातका मुख्य साधनहरूको नाम<br>• आफूले प्रयोग गर्ने यातायातका साधनहरू पहिचान<br>• आफ्नो परिवारले प्रयोग गर्ने यातायातका साधनहरू पहिचान<br>• परिवारका सदस्यहरुले बजारमा किनबेच गर्ने सामग्रीहरु पहिचान | ११ | • विभिन्न सञ्चार माध्यमहरूमार्फत सूचना प्राप्त गर्ने अभ्यास<br>• प्राप्त सूचना आदानप्रदान गर्ने अभ्यास<br>• सञ्चारका साधनहरूको प्रयोग गर्दा अपनाउनुपर्ने सुरक्षाका उपायहरू पहिचान<br>• सञ्चारका साधनहरूको प्रयोग गर्दा अपनाउनुपर्ने सुरक्षाका उपायहरूप्रति सचेतता<br>• आफ्नो गाउँ/नगरमा उत्पादित तथा निर्मित वस्तुहरूको पहिचान<br>• परिवारको आम्दानीका स्रोतहरू<br>• घर तथा विद्यालयमा प्रयोग गरिने सामग्रीको प्रयोग<br>• घर तथा विद्यालयमा प्रयोग गरिने सामग्रीको प्रयोगमा मितव्ययीता | १० | • सार्वजनिक स्थलहरूको सूचना, सङ्केत, पम्प्लेट, पोस्टर, ट्राफिक सङ्केतको जानकारी<br>• सार्वजनिक स्थलहरूको सूचना, सङ्केत, पम्प्लेट, पोस्टर, ट्राफिक सङ्केतको पालना गर्ने बानी<br>• सिकाइ एवम् सञ्चारका लागि कम्प्युटर र मोबाइल फोनको प्रयोग<br>• कम्प्युटर र मोबाइल फोनको दुरूपयोगबाट हुने हानिप्रति सचेतता<br>• आफ्नो गापा/ नपामा उत्पादित तथा निर्मित वस्तुहरूको पहिचान<br>• आफ्नो गापा/ नपामा उत्पादित तथा निर्मित वस्तुहरूको उपयोग गर्ने बानी<br>• मितव्ययी रुपमा खर्च गर्ने बानी<br>• आफ्नो पैसा बचत गर्ने बानी | १० |
| हाम्रो वरपरको संसार | • विभिन्न किसिमका मौसमहरु र मौसमअनुकुल लुगाको छनोट<br>• आफ्नो घर वरिपरि तथा | १७ | • विभिन्न किसिमका मौसमका विशेषताहरू पहिचान<br>• विभिन्न प्रकारका मौसम अनुकूल | १७ | • विभिन्न प्रकारका मौसमको विषेशता पहिचान<br>• विभिन्न प्रकारका मौसमले मानवीय जीवनमा पार्ने असरहरु | १७ |

| | विद्यालयको जमिनको स्वरूप पहिचान<br>● दैनिक जीवनमा हावाबाट हुने काम अवलोकन र यस सम्बन्धी सामान्य क्रियाकलापहरु<br>● पानीका स्रोतहरु र दैनिक जीवनमा यिनको उपयोगिता<br>● कागज पट्याएर नमुना बनाउने अभ्यास<br>● कागजलाई स्वतन्त्र रुपमा काटेर नयाँ आकृति बनाउने अभ्यास<br>● रङहरुको पहिचान<br>● विभिन्न आकार, बनोटहरू, बुट्टाहरूमा रङको प्रयोग | | आफ्नो हेरचाह<br>● चित्र हेरी भौगोलिक स्वरूप पहिचान<br>● आफ्नो टोल, समुदाय र त्यस वरिपरिको भौगोलिक स्वरूपको अवलोकन<br>● हावा र पानीका भौतिक गुणहरू पहिचान<br>● पानीका स्रोतहरू पहिचान<br>● दैनिक जीवनमा पानीको महत्व<br>● दैनिक जीवनमा हावाको प्रयोगको पहिचान<br>● त्रिभुज, चतुर्भुज, वर्गाकार तथा आयताकारमा कागज पट्याउने अभ्यास<br>● कागजबाट विभिन्न आकृतिका वस्तुहरू बनाउने अभ्यास<br>● स्थानीय क्षेत्रमा उपलब्ध सामग्रीबाट रङ बनाउने अभ्यास<br>● स्थानीय क्षेत्रमा उपलब्ध सामग्रीबाट बनाइएका रङहरूको प्रयोग गरी कागजमा चित्र बनाउने अभ्यास | | ● प्रतिकुल मौसमप्रति सचेतता<br>● पृथ्वीमा दिन र रात हुनुको कारण<br>● आफ्नो वडाको प्राकृतिक स्वरुप अवलोकन<br>● आफ्नो वडाको सामाजिक रहनसहन<br>● नक्सामा आफ्नो वडाका सामान्य आकृति कोर्ने अभ्यास<br>● नक्सामा आफ्नो वडाका सामान्य आकृति कोरी महत्त्वपूर्ण स्थलहरू देखाउने अभ्यास<br>● माटामा मिसिने पदार्थहरु (हावा, जैविक पदार्थहरू र पानी)<br>● पृथ्वीको आकार र भित्री तहहरूको नाम<br>● दैनिक जीवनमा गतिशील पानी र हावा शक्तिको प्रयोग<br>● पानी संरक्षणको उपायहरू<br>● ओरीगामीको परिचय<br>● कागजबाट चराको ओरिगामी तयार गर्ने अभ्यास<br>● कागजबाट सजावटका लागि वस्तु तयार गर्ने अभ्यास<br>● स्वतन्त्र चित्र बनाइ रङ भर्ने अभ्यास | |
|---|---|---|---|---|---|---|

## ११. एकीकृत पाठ्यक्रममा व्यवहारकुशल सिपहरू

विद्यालय शिक्षाको एउटा महत्त्वपूर्ण कार्य विद्यार्थीहरूमा व्यवहारकुशल सिपहरू (Soft skills) विकास गराउन सहयोग गर्नु हो । व्यवहारकुशल सिपहरू सबैलाई आवश्यक हुन्छन् । यी कुनै निश्चित कार्य वा भूमिकामा मात्र सीमित नभई विभिन्न कार्य वा भूमिकाका लागि आवश्यक हुने गर्दछन् । यस्ता सिपहरू विशेषत: विद्यार्थीका दैनिक जीवनका वास्तविक समस्या समाधानमा सहायक हुन्छन् । त्यसैले व्यवहारकुशल सिपहरू कुनै निश्चित कार्य, पेसा, विषयक्षेत्र वा ज्ञानको क्षेत्रसँग मात्र सम्बन्धित नभई विभिन्न कार्य, पेसा, विषयक्षेत्र वा ज्ञानको क्षेत्रमा कार्यसम्पादनसँग सम्बन्धित हुन्छन् । व्यवहारकुशल सिपहरूलाई विभिन्न फरक फरक नामले पहिचान गर्ने गरिन्छ । जस्तै: यसलाई समतलीय, सामान्य, अन्तरसम्बन्धित, स्थानान्तरणीय, आधारभूत, व्यावहारिक, रोजगारीमूलक वा एक्काइसौँ शताब्दीका सिप नामले पनि चिनिन्छ ।

व्यवहारकुशल सिपलाई विभिन्न नामले जनाइनुका साथै यसअन्तर्गत पर्ने सिप वा सक्षमताका सूचीलाई निश्चित सङ्ख्यामा सीमित गर्न कठिन भए पनि सोचाइ सिप, वैयक्तिक सिप, अन्तरवैयक्तिक सिप, बहुसाक्षरता सिप, नागरिक सिपअन्तर्गत प्रायजसो सबै व्यवहारकुशल सिपहरूलाई वर्गीकरण गरी समावेश गर्न सकिन्छ ।

सिकाइलाई दैनिक जीवनसँग आबद्ध गर्नका लागि विभिन्न विषय र तहका पाठ्यक्रमबिच अन्तरक्रिया हुनु आवश्यक छ । यस्तो अन्तरक्रियाबाट सिकाइलाई सामान्य विषयगत ज्ञान तथा सिपमा सीमित नगरी अधिसंज्ञानात्मक (Metacognitive) सिकाइलाई सहज गराई जीवनका समस्या समाधानका लागि उपयोगी बनाउन सहयोग प्राप्त हुन्छ । व्यवहारकुशल सिप सिकाइलाई अधिसंज्ञानात्मक (Metacognitive) तहमा पुऱ्याउन सहयोग गर्ने भएकाले एकीकृत पाठ्यक्रमको अवधारणाअन्तर्गत व्यवहारकुशल सिपलाई उपयुक्तताका आधारमा सबै विषय र तहमा एकीकृत गर्नु महत्त्वपूर्ण हुने दृष्टिकोणमा आधारित भई यस पाठ्यक्रममा पनि व्यवहारकुशल सिपहरूलाई सबै विषय र कक्षामा उपयुक्तताका आधारमा एकीकृत गरिएको छ । यसका लागि व्यवहारकुशल सिपका मुख्य क्षेत्रहरू र तिनको विस्तृतीकरण गरिनु आवश्यक छ । व्यवहारकुशल सिपका उल्लिखित पाँच विस्तृत क्षेत्रअन्तर्गतका सिपहरूको विस्तृतीकरण र तिनको सम्भाव्य व्याख्या निम्नअनुसार प्रस्तुत गरिएको छ :

### सोचाइ सिपहरू (Thinking Skills) (S1)

बालबालिकाले सूचना प्रशोधन गर्न, विभिन्न सूचनालाई संयोजन गर्न, निर्णय लिन र नयाँ विचार सिर्जना गर्न प्रयोग गर्ने संज्ञानात्मक क्रियाकलापहरू नै सोचाइ सिपहरू हुन् । बालबालिकाहरूले आफ्ना अनुभवहरूको बोध गर्दा, समस्याहरू हल गर्दा, निर्णय लिँदा, प्रश्नहरू गर्दा, योजना बनाउँदा अथवा सूचनाहरू सङ्गठित गर्दा आफ्नो सोचाइ सिपहरू प्रयोग गर्दछन् । प्रमुख सोचाइ सिपहरू र तिनको व्याख्या निम्नलिखित तालिकामा प्रस्तुत गरिएको छ :

**तालिका १६ : मुख्य सोचाइ सिपहरू**

| मुख्य सोचाइ सिपहरू (Major thinking skills) | सम्भाव्य व्याख्या (Possible explanation) |
|---|---|
| प्रयोग सिप (Application skill) (S1.1) | ● नयाँ परिस्थिति एवम् सन्दर्भमा पहिले सिकेका ज्ञान तथा सिपलाई प्रयोग गर्ने योग्यता |
| सिकाइ सिप (Learning skill) (S1.2) | ● सिकाइ हासिल गर्ने र जारी राख्ने योग्यता<br>● आफ्नो सिकाइलाई सङ्गठित गर्ने योग्यता |
| रचनात्मक सोचाइ सिप (Creative thinking skill) (S1.3) | ● ढाँचा एवम् सम्बन्धलाई परीक्षण र सूचनालाई वर्गीकरण गरी क्रममा मिलाउने योग्यता<br>● राम्रा तर्कहरूको विश्लेषण तथा सिर्जना गर्ने र प्रचलित मान्यताहरूलाई चुनौती दिने योग्यता<br>● परिकल्पना निर्माण एवम् भविष्यवाणी गर्ने, सबुत वा प्रमाण परीक्षण गर्ने र नतिजामा पुग्ने योग्यता<br>● समस्याहरू र निर्णयहरू पहिचान तथा विश्लेषण गर्ने र विभिन्न विकल्पहरूको खोजी गर्ने योग्यता<br>● समस्याहरू समाधान गर्ने र उपलब्धिहरूको मूल्याङ्कन गर्ने योग्यता |

| मुख्य सोचाइ सिपहरू (Major thinking skills) | सम्भाव्य व्याख्या (Possible explanation) |
|---|---|
| | • काल्पनिक रूपमा सोच्ने, क्रियाशील रूपमा नयाँ विचार वा दृष्टिकोण खोज्ने समस्याहरू वा समाधान प्रवर्तनात्मक बनाउने र जोखिम उठाउने योग्यता |
| समालोचनात्मक सोचाइ सिप (Critical thinking skill) (S1.4) | • प्रभावकारी तर्क गर्ने योग्यता<br>• पद्धति सोचको प्रयोग गर्ने योग्यता<br>• छानबिन तथा निर्णय गर्ने योग्यता |
| निर्णय तथा समस्या समाधान सिप (Decision making and problem solving skill) (S1.5) | • विभिन्न स्रोतहरूबाट सूचना प्राप्त गर्ने योग्यता<br>• निश्चित उद्देश्यका लागि विश्वसनीयता एवम् उपयुक्तताका आधारमा विभिन्न स्रोतहरूमध्येबाट उपयुक्त स्रोत चयन गर्ने योग्यता<br>• सूचनाहरूको अभिलेखीकरण गर्ने, सङ्गठित गर्ने, सारांश निकाल्ने, एकीकृत गर्ने योग्यता<br>• विकल्प छनोट गरी निर्णय लिने र समस्या समाधान गर्ने योग्यता |

## वैयक्तिक सिपहरू (Intrapersonal Skills) (S2)

वैयक्तिक सिपहरू विभिन्न किसिमका छन् । यसअन्तर्गत जिम्मेवारी एवम् प्रतिबद्धता विकास गर्नु, स्वव्यवस्थापन, आत्मबल/स्वाभिमानको विकास, इमानदारी/ स्वअनुशासन, समय व्यवस्थापन, स्वतन्त्र सिकाइ, लचकता र अनुकूलनता जस्ता सिपहरू पर्दछन् । वैयक्तिक सिपहरूको विकासका लागि पाठ्यक्रमले बालबालिकाको संज्ञानात्मक विकास, सामाजिक तथा संवेगात्मक विकास, वाचन तथा भाषा विकास र कुशल क्रियात्मक सिप विकास गराउनु पर्दछ । वैयक्तिक सिपहरूले विद्यार्थीहरूलाई काम तथा क्रियाकलापहरूको जिम्मेवारी लिन, विभिन्न काम तथा क्रियाकलापहरूप्रति प्रतिबद्धता एवम् आत्मविश्वास प्रदर्शन गर्न, आफ्नो योग्यताको लेखाजोखा गर्न र आफ्नो जीवनको लक्ष्यबारे विचार व्यक्त गर्न सहयोग पुऱ्याउनुपर्दछ । आफ्नो हेरचाह गर्ने योग्यता, दैनिक जीवन व्यवस्थापन गर्ने योग्यता, कार्ययोजना विकास गर्ने, मूल्याङ्कन गर्ने कार्यसमेत समावेश गरी वैयक्तिक लक्ष्यहरू पहिचान गर्ने जस्ता स्वव्यवस्थापनसम्बन्धी सिपहरू यसअन्तर्गत पर्दछन् । त्यसै गरी यसअन्तर्गत आत्मबल तथा स्वाभिमानको विकास इमानदारी/स्वअनुशासन व्यक्तिगत लक्ष्य निर्धारण र कार्यमा अग्रसरता, स्वतन्त्र सिकाइ, लचकता र अनुकूलन, जिम्मेवारी एवम् प्रतिबद्धता जस्ता वैयक्तिक सिपहरू पर्दछन् । प्रमुख वैयक्तिक सिपहरू र तिनको व्याख्या निम्नलिखित तालिकामा प्रस्तुत गरिएको छ :

**तालिका १७ : मुख्य वैयक्तिक सिपहरू**

| मुख्य वैयक्तिक सिपहरू (Major intrapersonal skills) | सम्भाव्य व्याख्या (Possible explanation) |
|---|---|
| स्वव्यवस्थापन (Self management) (S2.1) | • आफ्नो हेरचाह गर्ने योग्यता<br>• दैनिक जीवन व्यवस्थापन गर्ने योग्यता<br>• कार्ययोजना विकास गर्ने, मूल्याङ्कन गर्ने कार्यसमेत समावेश गरी वैयक्तिक लक्ष्यहरू पहिचान गर्ने, मूल्याङ्कन गर्ने र प्राप्त गर्ने योग्यता |
| आत्मबल/स्वाभिमानको विकास (Develop self-esteem/respect) (S2.2) | • एउटा व्यक्तिका रूपमा स्वयम् प्रति विश्वस्त हुने योग्यता |
| इमानदारी/ स्वअनुशासन (Integrity/honesty/self-discipline) (S2.3) | • स्वयम्को लेखाजोखा वा मूल्याङ्कन गर्ने, आफूले आफ्ना कार्यसम्पादनको मूल्याङ्कन गर्ने, पृष्ठपोषण प्राप्त गर्ने र यसमा प्रत्युत्तर दिने योग्यता<br>• स्वअनुशासन र इमानदारी प्रदर्शन गर्ने योग्यता |
| समय व्यवस्थापन (Time management) (S2.4) | • आफ्ना दैनिक क्रियाकलापमा समय व्यवस्थापन गर्ने योग्यता<br>• कार्यको प्राथमिकता निर्धारया गर्न सक्ने योग्यता |
| व्यक्तिगत लक्ष्य निर्धारण र कार्यमा अग्रसरता (Personal goal setting and taking initiatives) (S2.5) | • दैनिक कार्यमा लक्ष्य निर्धारण गर्ने, कार्यमा अग्रसरता लिने योग्यता |
| स्वतन्त्र सिकाइ, लचकता र अनुकूलनता (Independent learning, flexibility and adaptability) (S2.6) | • विभिन्न साधन, सूचना तथा विधिको प्रयोग गरी आफैँ सिक्ने योग्यता<br>• सिकाइ, कार्य वा व्यवहारमा परिस्थितिअनुकूल परिवर्तन तथा समायोजन गर्न सक्ने योग्यता |
| जिम्मेवारी एवम् प्रतिबद्धता (Responsibility and commitment) (S2.7) | • नयाँ एवम् कठिन परिस्थितिहरूमा सहयोग पुऱ्याउने वैयक्तिक गुणहरू विकसित गर्ने योग्यता, उदाहरणका लागि पहल गर्ने, लचकदार बन्ने, विश्वसनीय बन्ने, कठिनाइहरू उत्पन्न भएका बेला दृढ रहने |

## अन्तरवैयक्तिक सिपहरू (Interpersonal Skills) (S3)

अन्तरवैयक्तिक सिपले एक व्यक्तिले अर्को व्यक्तिसँग प्रभावकारी रूपमा सञ्चार र समन्वय गर्नु, सहयोग तथा सद्भाव कायम गर्न सक्षम हुनु, असल सम्बन्ध कायम गर्नु भन्ने जस्ता योग्यतालाई जनाउँछ । यसमा फरक फरक लक्ष्य र उद्देश्यका विविध सन्दर्भमा अरूसँग कार्य गर्ने, सामूहिक लक्ष्य

पहिचान गर्ने, मूल्याङ्कन गर्ने र प्राप्त गर्ने, समूहमा जिम्मेवारी पहिचान गर्ने र भूमिका बाँडफाँड गर्ने, समूहमा राम्रो सम्बन्ध विकास गर्ने, समूहका प्रगतिको लेखाजोखा गर्ने, समूहको कार्यको समीक्षा गर्ने र व्यक्तिगत रूपमा आफ्नो योगदानको प्रतिविम्बन गर्ने जस्ता पक्षहरू समावेश हुन्छन् ।

अन्तरवैयक्तिक सिपहरूमध्ये सञ्चार एउटा ज्यादै महत्त्वपूर्ण सिप हो । सुन्न र बोल्न सक्ने योग्यता आधारभूत सञ्चार सिपहरू हुन् । यी सिपहरू कक्षा १, २ र ३ का विद्यार्थीहरूमा विद्यालयमा रहँदा विकसित हुनुपर्दछ । जबसम्म विद्यार्थीहरूले आफ्नो स्थानीय वा राष्ट्रिय भाषामा सञ्चार गर्न सक्दैनन् तबसम्म उनीहरूले आफ्ना जीवनका लक्ष्यहरू प्राप्त गर्न र आफ्नो ज्ञान एवम् सामर्थ्य विकास गर्न तथा आफ्नो दैनिक जीवनमा काम गर्न समर्थ हुँदैनन् । सञ्चार सिपहरूले बालबालिकालाई संवेगात्मक बौद्धिकता, स्थिरता, स्पष्टता, भिन्नता, आत्मविश्वास, सहानुभूति, आदर, सुन्ने, खुला सोच र राम्रो प्रश्न सोध्ने सिप विकास गर्दछ । असल सञ्चार भनेको समग्रमा प्रभावकारी सुनाइ हो । बालबालिकाहरूले विद्यालय अवधिभर खुला सोच विकास गर्नुपर्दछ । सुदृढ सञ्चारका लागि एउटा व्यक्ति खुला मस्तिष्कसहित अन्य व्यक्तिका दृष्टिकोण बुझ्नेतर्फ प्रतिबद्ध हुनुपर्दछ ।

व्यक्तिको जीवन तथा कार्यका प्राय: सबै पक्षहरूमा सहकार्य सिपहरूको आवश्यकता पर्दछ । हिजोआज व्यापार उद्योगमा वा कुनै कार्यका लागि सँगसँगै मिलेर समूहमा काम गर्न केही संयुक्त प्रयास हुनुपर्दछ भन्ने कुराले प्रवेश पाएको छ । कामको संसारमा अधिकांश क्षेत्रमा सहयोग तथा सहकार्यलाई एउटा आवश्यक सिपका रूपमा हेरिन्छ । विद्यार्थीहरूले परियोजना तथा खोजमूलक सिकाइमा आफूलाई व्यस्त राख्नुपर्दछ र सामाजिक परिवेशमा आफ्ना ज्ञान एवम् समस्या समाधानका सिपहरू प्रयोग गर्न सक्नुपर्दछ । सहकार्य सिपले विद्यार्थीहरूलाई उनीहरूको साझा लक्ष्यहरू हासिल गर्न सँगै मिलेर सहयोगी रूपमा काम गर्न मदत गर्दछ । जब बालबालिकाहरू एकआपसमा मिलेर सिक्ने प्रक्रियामा रहन्छन् तब उनीहरू कुनै समस्या समाधानका लागि मिलेर काम गर्दछन् । यसबाट उनीहरूले कुनै काम पूरा गर्न वा कुनै उत्पादन गर्न सक्दछन् । सहयोगी सिकाइ वातावरणमा सिकारुका अलग अलग दृष्टिकोणले सुन्नुपर्ने हुँदा सिकारुले सामाजिक एवम् संवेगात्मक दुवै पक्षबाट चुनौतीहरूको सामना गर्नुपर्दछ र आफ्ना विचारहरूलाई स्पष्ट पार्न र प्रतिरक्षा गर्न सक्नुपर्दछ । यसो गर्दा सिकारुले विज्ञ वा शिक्षकहरूले दिएको प्रारूप वा ढाँचामा भर नपरी आफ्नै विशेष प्रकारका धारणागत प्रारूपहरू सिर्जना गर्न थाल्छन् । यसभन्दा बढी सहकार्य गर्दा साझा सिकाइले सिकारुलाई छलफलमा भाग लिने आवसरहरू दिने, आफ्ना सिकाइको जिम्मेवारी लिने र यसअनुरूप गहन सोच गर्ने व्यक्तिका रूपमा विकसित गर्दछ । बालबालिकाहरूमा सञ्चार र सहकार्य सिपसँगसँगै सहयोग तथा सहानुभूति, सक्रियतापूर्वक सुन्ने र सांस्कृतिक तथा नैतिकता जस्ता अन्तरवैयक्तिक सिपहरूको विकास पनि उत्तिकै आवश्यक छ । प्रमुख अन्तरवैयक्तिक सिपहरू र तिनको व्यख्या निम्नलिखित तालिकामा प्रस्तुत गरिएको छ :

**तालिका १८ : मुख्य अन्तरवैयक्तिक सिपहरू**

| मुख्य अन्तरवैयक्तिक सिपहरू (Major interpersonal skills) | सम्भाव्य व्याख्या (Possible explanation) |
|---|---|
| सञ्चार (Communication) (S3.1) | • सामाजिक अन्तरक्रियाहरू वा सामाजिक अन्तरक्रियात्मक सन्दर्भमा आफ्नो एवम् अरूका संवेगहरू, अभिप्रेरणा र व्यवहारहरूलाई अध्ययन गर्न एवम् व्यवस्थित गर्न सक्ने योग्यता<br>• प्रचलित विभिन्न साधनहरूको प्रयोग तथा स्थानान्तरणको माध्यमबाट विचार आदान प्रदान गरी अर्थ पहिल्याउने योग्यता<br>• आधारभूत विद्युतीय सञ्चार सिपहरूको घरपरिवार एवम् कार्यस्थलमा प्रयोग गर्ने योग्यता |
| सहकार्य (Collaboration) (S3.2) | • समस्या हल गर्ने, नवीन उत्पादन गर्ने अथवा विषयवस्तु सिक्ने र सक्षमता हासिल गर्ने, सँगै काम गरेका दुई वा दुईभन्दा बढी व्यक्तिहरूबिच सहयोगात्मक अन्तरक्रिया गर्ने योग्यता<br>• विभिन्न सन्दर्भमा अलग अलग उद्देश्यहरू एवम् लक्ष्यहरू लिएका व्यक्तिसँग मिलेर काम गर्ने योग्यता<br>• सामूहिक लक्ष्यहरूको पहिचान, मूल्याङ्कन तथा प्राप्त गर्ने योग्यता<br>• समूहमा जिम्मेवारी पहिचान गरी भूमिका बाँडफाँड गर्ने योग्यता<br>• समूहमा राम्रो सम्बन्ध विकासित गर्ने योग्यता<br>• समूहको कामको प्रगति जाँच गर्ने, पुनरवलोकन गर्ने र व्यक्तिगत रूपमा आआफ्नो योगदानबारे प्रतिविम्बन गर्ने योग्यता |
| सहयोग तथा सहानुभूति (Cooperation and empathy) (S3.3) | • कुनै घटना, कार्य, अवस्था र नतिजाका आधारमा आवश्यकतानुसार कुनै व्यक्तिलाई सहयोग तथा सहानुभूति प्रदान गर्ने योग्यता |
| सक्रियतापूर्वक सुन्ने (Active listening) (S3.4) | • अरूका विचार, दृष्टिकोण, सूचना तथा जानकारी सक्रियतापूर्वक सुन्ने र बुझ्ने र तदनुकूल आवश्यक प्रतिक्रिया जनाउने योग्यता |
| सांस्कृतिक सिपहरू/नैतिकता (Cultural skills/ethics) (S3.5) | • सांस्कृतिक विविधता पहिचान गर्ने योग्यता<br>• विश्वव्यापी मुद्दाहरूमा दृष्टिकोण विकास गर्ने योग्यता<br>• प्रजातान्त्रिक समाज निर्माण गर्न बौद्धिक योग्यताहरू विकास गर्ने योग्यता |

## सूचना प्रविधि तथा बहुसाक्षरता सिपहरू (Information technology and multiliteracy skills) (S4)

एक्काइसौँ शताब्दीमा सफलता पाउन विद्यार्थीहरूले विज्ञान, प्रविधिका साथै संस्कृतिमा कुशलता प्राप्त गर्नुपर्दछ । त्यस्तै विभिन्न रूपमा सूचनाहरूको राम्रो बुझाइ हुनुपर्दछ । त्यस्तै विद्यार्थीहरूले विविध वातावरणको व्यवस्थापन, संस्कृतिहरूको ज्ञान, एउटा विश्वव्यापी सोच, प्रभावकारी समाधान, सिक्नका लागि जिज्ञासु, सफलतापूर्वक बाह्य जगत्‌बाट चिन्तन गर्ने, सञ्चार सिपहरू र विश्लेषणलाई बुझ्न सक्ने जस्ता विभिन्न सिपहरू विकसित गर्नुपर्दछ ।

बालबालिकाहरूले विद्यालयमा रहँदा नै डिजिटल साक्षरताको सामान्य सक्षमता हासिल गर्नुपर्छ । प्रमुख बहुसाक्षरता सिपहरू र तिनको व्यख्या निम्नलिखित तालिकामा प्रस्तुत गरिएको छ :

**तालिका १९ : मुख्य बहुसाक्षरता सिपहरू**

| मुख्य बहुसाक्षरता सिपहरू (Major Multiliteracy skills) | सम्भाव्य व्याख्या (Possible explanation) |
|---|---|
| आधारभूत साक्षरता (Basic literacy) (S4.1) | • उपयुक्त तहको भाषागत (स्थानीय एवम् राष्ट्रिय भाषाहरूमा) एवम् सङ्ख्यात्मक दक्षता विकास गरी आफ्नो पेसा वा कार्य सम्पादन गर्न सक्ने तथा समाजमा आफ्नो लक्ष्य प्राप्त गर्ने र हालको डिजिटल युगसापेक्ष आफ्नो ज्ञान एवम् क्षमता प्राप्त गर्ने योग्यता |
| प्राविधिक साक्षरता (Technological literacy) (S4.2) | • प्रविधि के हो, यसले कसरी काम गर्दछ, यसले के के उद्देश्यहरू पूरा गर्न सक्छ र यसलाई कसरी कुशल एवम् प्रभावकारी रूपमा उद्देश्य प्राप्त गर्न प्रयोग गर्ने योग्यता |
| दृश्य साक्षरता (Visual literacy) (S4.3) | • परम्परागत एवम् एक्काइसौँ शताब्दीको सञ्चार माध्यम प्रयोग गरी निर्णय, सञ्चार र सिकाइमा तस्बिर/छवि र दृश्य सामग्रीको प्रयोग, व्याख्या एवम् सिर्जना गर्न सक्ने योग्यता |
| सूचना साक्षरता (Information literacy) (S4.4) | • प्रविधि, विभिन्न सञ्चार सञ्जाल र विद्युतीय स्रोतहरूको प्रयोग गरी विभिन्न सञ्चार माध्यमहरूका सूचनाहरूको मूल्याङ्कन, सूचनाको आवश्यकता पहिचान, सूचनाहरू पत्ता लगाउने, संश्लेषण गर्ने र प्रभावकारी तरिकाले प्रयोग गर्ने योग्यता |
| बहुसांस्कृतिक साक्षरता (Multi-cultural literacy) (S4.5) | • आफ्नै र अन्यको संस्कृति, चालचलन, मूल्य एवम् विश्वासबारे समानता एवम् भिन्नता बुझ्ने, सम्मान एवम् प्रशंसा गर्ने योग्यता |

## नागरिक सिप (Citizenship Skills) (S5)

शिक्षाको एउटा उद्देश्य बालबालिकामा नागरिक अधिकार र दायित्वप्रति सचेतता विकास गराई नागरिक अधिकार प्राप्ति र दायित्व कुशलतापूर्वक निर्वाह गर्ने नागरिकका रूपमा विकास गर्न सहयोग गर्नु हो । यसका लागि विद्यालय शिक्षाका प्रारम्भिक कक्षादेखि नै नागरिक शिक्षालाई विभिन्न विषयमा एकीकृत गर्नुपर्दछ । यसअन्तर्गत लोकतन्त्रिक मूल्य र मान्यता, सहभागिता, सहनशीलता र खुलापन, विविधताको बोध र सम्मान, राष्ट्रिय पहिचान, समाज, भाषा, संस्कृति र राष्ट्रप्रति प्रेम र अपनत्व, व्यक्तिगत, समाजिक तथा नागरिक दायित्व र जिम्मेवारी वहन गर्नेलगायत विश्वव्यापी चेतनाको विकास गराउनुपर्दछ । एउटा असल नागरिकको विकासका लागि विभिन्न विषयमा एकीकृत गरी नागरिक सिपहरूसँग सम्बन्धित सिपहरूमा विद्यार्थीमा सक्षमताहरू हासिल गराउनुपर्दछ । प्रमुख नागरिक सिपहरू सिपहरू र तिनको व्याख्या निम्नलिखित तालिकामा प्रस्तुत गरिएको छ :

**तालिका २० : मुख्य नागरिक सिपहरू**

| मुख्य नागरिक सिपहरू (Major citizenship skills) | सम्भाव्य व्याख्या (Possible explanation) |
|---|---|
| सहनशीलता र खुलापन (Tolerance and openness) (S5.1) | • परिवार तथा समुदायका प्रचलन तथा मान्यताहरूलगायत अन्य मान्यता तथा अभ्यासप्रति सकारात्मक रहने क्षमता<br>• आफ्ना विचार, मान्यता र अभ्यासलाई पारदर्शी बनाउने, अरूको प्रतिक्रिया सुन्ने र आवश्यकताअनुसार स्विकार्ने क्षमता |
| विविधताको सम्मान र अन्तरसांस्कृतिक बुझाइ (Respect for diversity and intercultural understanding) (S5.2) | • स्थानीय सांस्कृतिक वातावरण तथा विविधता बुझ्ने क्षमता<br>• विभिन्न दृष्टिकोणहरू तथा विविधताको सम्मान गर्ने क्षमता |
| लोकतन्त्रिक, सहभागितात्मक र समतामूलक मूल्य (Democratic, participatory and equitable value) (S5.3) | • कुनै कार्यमा सहभागी हुन, फरक विचारप्रति सहिष्णु हुन, कार्य तथा सहभागितामा समतालाई प्रोत्साहन गर्न र आफ्नो र अरूको अधिकार तथा स्वाभिमान कायम राख्ने क्षमता |
| वातावरणप्रतिको सजगता र सम्मान (Awarness of and respect for the environment) (S5.4) | • कुने कार्य वा व्यवहार प्रदर्शनका क्रममा भौगोलिक तथा सामाजिक सांस्कृतिक वातावरणको अनुकूलनलाई ध्यान दिने क्षमता |
| राष्ट्रिय पहिचान र अपनत्वको अनुभूति (National identity and sense of belonging) (S5.5) | • आफ्नो समुदाय, भाषा, संस्कृति तथा राष्ट्रिय पहिचानप्रति सजक रही सम्मान गर्ने र अपनत्वको अनुभूति गर्ने क्षमता |
| सामाजिक एवम् नागरिक जिम्मेवारी (Social and civic responsibility) (S5.6) | • सार्वजनिक वस्तुहरूको अभिवृद्धि एवम् समाज, वातावरण र प्रजातान्त्रिक आदर्शको सुरक्षा गर्ने गरी प्राविधिलाई व्यवस्थित गर्ने योग्यता |
| वैयक्तिक जिम्मेवारी (Personal responsibility) (S5.7) | • एउटा नागरिकका रूपमा, परिवार एवम् समुदायको सदस्यका रूपमा अनुशासित, इमानदार भई र गुणस्तरीय जीवन प्राप्त गर्ने योग्यता |

## १२. पाठ्यक्रमको एकीकृत स्वरूप

खण्ड १० मा प्रस्तुत गरिएका तहअनुसारका विषयगत सक्षमताहरू, विषयगत सिकाइ उपलब्धिहरू र विषयवस्तुको क्षेत्र र क्रमका आधारमा विषयवस्तुलाई अन्तरसम्बन्धित हुने गरी निम्नलिखित स्वरूपमा कक्षा १-३ को पाठ्यक्रमलाई एकीकृत गरी प्रस्तुत गरिएको छ :

(क) समग्र पाठ्यक्रमको एकीकृत संरचना तयार गर्दा हाम्रो सेरोफेरो, गणित, नेपाली भाषा र अङ्ग्रेजी भाषा विषयक्षेत्रलाई बहुविषयक ढाँचामा प्रस्तुत गरिएको छ ।

(ख) भाषा विषयक्षेत्रअन्तर्गत नेपाली भाषा, अङ्ग्रेजी भाषा र विभिन्न मातृभाषाका पाठ्यक्रम समावेश हुने भए पनि यसमा अनिवार्य विषयका रूपमा रहेका नेपाली र अङ्ग्रेजी भाषाका पाठ्यक्रम मात्र समावेश गरिएको छ । मातृभाषालाई स्थानीय विषयका रूपमा स्थानीय तहले विकास वा छनोट गरी पाठ्यक्रम विकास तथा कार्यान्वयन गर्नुपर्दछ । नेपाली र अङ्ग्रेजी भाषा विषयका पाठ्यक्रम सुनाइ, बोलाइ, पढाइ र लेखाइ गरी भाषाका आधारभूत चार सिपहरू तथा भाषिक कार्यहरूका आधारमा सङ्गठित गरिएको छ । यी भाषिक सिपहरू तथा भाषिक कार्यहरूको सिकाइलाई पनि केही अन्तरविषयक विषयक्षेत्रमा र अन्यलाई विषयक्षेत्रमा सङ्गठित गरी बहुविषयक संरचनाअनुसारको ढाँचामा सङ्गठित गरिएको छ ।

(ग) गणित विषयक्षेत्रलाई पनि केही बहुविषयक विषयक्षेत्रमा सङ्गठित गरी बहुविषयक संरचनाअनुसारको ढाँचामा समावेश गरिएको छ ।

(घ) उल्लिखित विषयक्षेत्रको पाठ्यक्रम संरचनाअन्तर्गत समावेश हुन सक्ने व्यवहारकुशल सिपहरू पहिचान गरी प्रत्येका कक्षा र विषयक्षेत्रमा एकीकृत गर्ने गरी पाठ्यक्रमको समग्र संरचना तयार गरिएको छ ।

(ङ) समग्र पाठ्यक्रमको संरचना बहुविषयक ढाँचाको एकीकृत स्वरूपको रहेको छ । यसमा व्यवहारकुशल सिपहरूलाई सबै कक्षा र विषयक्षेत्रमा उपयुक्तताका आधारमा एकीकृत गरिएको छ ।

### १२.१ पाठ्यक्रमको एकीकृत संरचनामा कक्षागत सिकाइ उपलब्धिको विस्तृतीकरण

कक्षा १-३ को विषयक्षेत्रगत क्रम एकीकृत गरी समायोजन गर्ने क्रममा तालिका नं. २१, २२ र २३ मा विषयक्षेत्रहरूको क्रम विचलन हुन गएकाले पाठ्यक्रम प्रयोगकर्ताले देहायबमोजिमको विषयक्षेत्रगत क्रमका आधारमा मात्र उपयोग गर्नुपर्ने छ ।

| क्र.स. | नेपाली | अङ्ग्रेजी | सेरोफेरो | गणित | | |
|---|---|---|---|---|---|---|
| | कक्षा १-३ | कक्षा १-३ | कक्षा १-३ | कक्षा १ | कक्षा २ | कक्षा ३ |
| १. | म र मेरो परिवार | तालिका नं. २१, २२ र २३ मा राखिएको क्रमानुसार नै प्रयोग गर्नुपर्ने छ । | तालिका नं. २१, २२ र २३ मा राखिएको क्रमानुसार नै प्रयोग गर्नुपर्ने छ । | म र मेरो परिवार | म र मेरो विद्यालय | मेरो दैनिक जीवन-१ |
| २. | मेरो दैनिक जीवन | | | हाम्रो समुदाय | मेरो दैनिक जीवन | सङ्ख्याको ज्ञान |
| ३. | हाम्रो समुदाय | | | मेरो विद्यालय | सङ्ख्याको ज्ञान | हाम्रो समुदाय |
| ४. | मेरो विद्यालय | | | मेरो दैनिक जीवन | हाम्रो समुदाय | मेरो सिर्जना |
| ५. | हाम्रो वातावरण | | | मेरो सिर्जना | गणितका आधारभूत क्रिया (जोड र घटाउ) | गणितका आधारभूत क्रिया |
| ६. | मेरो सिर्जना | | | सञ्चार प्रविधि र बजार | मेरो विद्यालय | मेरो दैनिक जीवन-२ |
| ७. | रुचि र बानी | | | | मेरो सिर्जना | सञ्चार प्रविधि र बजार |
| ८. | हाम्रो संस्कृति | | | | सञ्चार प्रविधि र बजार | नाप |
| ९. | सञ्चार प्रविधि र बजार | | | | गणितका आधारभूत क्रिया (गुणन र भाग) | |
| १०. | हाम्रा क्रियाकलाप | | | | | |
| ११. | हाम्रो वरपरको संसार | | | | | |

कक्षा १-३ को समग्र पाठ्यक्रमको एकीकृत संरचनामा कक्षागत सिकाइ उपलब्धिको विस्तृतीकरण गरी विषयक्षेत्र/थिमअनुसार निम्नअनुसार सङ्गठित गरिएको छ :

**तालिका २१ : पाठ्यक्रमको एकीकृत संरचनामा कक्षागत सिकाइ उपलब्धिको विस्तृतीकरण (कक्षा १)**

| विषयवस्तुको क्षेत्र (Theme/content area) | विषयक्षेत्रअनुसार सिकाइ उपलब्धि | | | |
|---|---|---|---|---|
| | हाम्रो सेरोफेरो | गणित | नेपाली भाषा | अङ्ग्रेजी भाषा |
| १. वर्ण (Alphabet) | | | | **Listening**<br>• Imitate, identify and discriminate sounds.<br>• Identify words that have the same initial, medial or final sound.<br>• Blend individual sounds in simple one-syllable words. (e.g. /s/ /i/ /t/ →sit)<br>• Recognize, identify and produce rhyming words. (e.g. cat →bat, sat)<br>• Link an initial sound to a picture of an object that begins with that sound (e.g. Show a picture of a book and identify the initial sound /b/).<br>• Name a printed letter that matches with a sound (e.g. the teacher says /t/ and the student points to the /t/ letter).<br>• Match spoken words to printed words (e.g. the teacher pronounces /pin/, and the student selects pin from a set of three word cards).<br>• Recognize and comprehend words and simple expressions.<br>• Respond to the audio or the teacher non-verbally and verbally.<br>**Speaking**<br>• Imitate and produce sounds and words.<br>• Blend the initial sounds with other sounds, i.e. onset with rime. (e.g. c+at).<br>• Pronounce grade appropriate words correctly.<br>• Ask and answer short, simple questions.<br>• Sing or recite a song/chant by listening to the teacher or an audio.<br>**Reading**<br>• Read small and capital letters.<br>• Put sounds together to read words and sentences.<br>• Recognize and read familiar words accompanied by visuals.<br>• Perform rhymes and chants with appropriate rhyme and rhythm.<br>• Understand the meaning of grade appropriate words.<br>**Writing** |

| | | | | |
|---|---|---|---|---|
| | अङ्गहरू चिन्न<br>● विभिन्न मौसम र समयमा देखिने जनावरहरू चिन्न र तिनीहरूको सूची तयार गर्न<br>● मानिसले जनावर र बिरुवाहरूबाट पाउने फाइदा (खाना र लुगा) बताउन | | प्रयोग गरी मौखिक तथा लिखित अभिव्यक्ति दिन | |
| ४. मेरो विद्यालय (My school) | ● विद्यालयको हाताको सरसफाइ कार्यक्रममा सहभागी हुन<br>● विद्यालयमा भएको खेल सामग्री, पुस्तकालय तथा बुक कर्नरमा भएका सामानको जतनसाथ प्रयोग गर्न<br>● विद्यालयमा निश्चित समयमा गरिने क्रियाकलापहरू बताउन । (जस्तै: अभिभावक दिवस, वार्षिक उत्सव, आदि)<br>● पी.टी.तालिका नं. १ देखि ७ सम्मका ताल मिलाएर कसरतहरू गर्न र ५० मिटरसम्म दौडन<br>● विभिन्न किसिमका कागजलाई काट्न<br>● विभिन्न किसिमका कागजलाई निश्चित आकार मिलाएर काट्न<br>● विभिन्न किसिमका कागजलाई काटेर/च्यातेर टाँसी आफूलाई मन पर्ने आकृति बनाउन<br>● च्यातेका/काटेका कागजका टुक्राहरूलाई एकमाथि अर्को टाँस्दै चित्र संयोजन गर्न<br>● प्राथमिक उपचारको अवधारणा बताउन<br>● विभिन्न स्थानमा हुन सक्ने दुर्घटनामा प्राथमिक उपचारको सेवा लिन<br>● घर तथा विद्यालय र समुदायमा हुने दुर्घटनाहरूका कारण बताउन<br>● घर तथा विद्यालय र समुदायमा हुने दुर्घटनाहरूबाट बच्ने उपाय अपनाउन<br>● व्यक्तिगत सुरक्षाका उपायहरू अपनाउन<br>● वरपर घट्न सक्ने प्रकोपबाट सुरक्षित हुन | | **ध्वनि सचेतीकरण**<br>● सरल तथा जोडेमोडेका वर्णयुक्त शब्दको पहिचान गरी उच्चारण गर्न<br>● संयुक्त वर्ण प्रयोग हुने शब्द उच्चारण गर्न<br>**श्रव्य/दृश्यबोध**<br>● दुई दृश्य अवस्थाको तुलना गरी मौखिक तथा लिखित वर्णन गर्न<br>● विभिन्न दृश्य सूचना तथा सामग्रीका बारेमा प्रतिक्रिया दिन<br>**लेख्यवर्ण सचेतीकरण**<br>● संयुक्त वर्णसंरचना भएका शब्दका सुरु र अन्त्यका वर्ण छुट्याएर र जोडेर पढ्न तथा लेख्न<br>● वस्तु र चित्रका नाम भन्न र लेख्न<br>**शब्दभण्डार**<br>● शब्दको अर्थ भन्न, लेख्न र वाक्यमा प्रयोग गर्न<br>● विद्यालयमा प्रयोग गरिने वस्तु जनाउने शब्दहरूको सूची बनाउन<br>**पठन प्रवाह**<br>● हाउभाउ, गति र शुद्धतासहित गद्य रचना सस्वर र द्रुत पठन गर्न<br>● हाउभाउ, गति, यति, लय र शुद्धतासहित पद्य रचना सस्वर, युगल, सामूहिक, स्वतन्त्र र द्रुत पठन गर्न<br>**पठन बोध**<br>● निर्धारित पाठको सार भन्न र लेख्न<br>● पाठ पढेर वा सुनेर स्वमूल्याङ्कन गर्न<br>● पाठमा प्रयोग भएका मुख्य शब्द तथा विषयका बारेमा लेख्न<br>● निर्धारित पाठको पात्र तथा शीर्षक परिवर्तन गरी भन्न र लेख्न<br>**लेखाइ**<br>● विषयवस्तुमा आधारित भई प्रश्नोत्तर गर्न<br>● विचार र धारणालाई सङ्गठित गरी मौखिक तथा लिखित प्रस्तुति दिन<br>● घटना वर्णन र बुँदा लेखन गर्न<br>**कार्यमूलक व्याकरण**<br>● लिङ्ग, वचन, पुरुष र आदरको सङ्गति मिलाई मौखिक तथा लिखित अभिव्यक्ति दिन<br>● पूर्णविराम, अल्पविराम, प्रश्नवाचक, विस्मयादिबोधक र उद्धरण चिह्नको प्रयोग गरी लिखित अभिव्यक्ति दिन<br>● क्रियाका कालअनुसारका वाक्यको प्रयोग गरी मौखिक तथा लिखित अभिव्यक्ति दिन | **Language functions**<br>Asking for and giving permission<br>Interrupting and getting attention<br>Congratulating and praising<br>**Listening**<br>● Comprehend words and simple expressions.<br>● Listen and respond to a wide variety of spoken stimuli (words, sentences, questions, instructions, etc.) both verbally and non-verbally.<br>● Find out specific information (names, dates, time, etc) from different kinds of simple spoken language.<br>● Perform a variety of listening comprehension tasks.<br>● Listen and comprehend a range of songs and stories with a variety of visual clues.<br>**Speaking**<br>● Produce words, phrases, simple sentences with intelligible pronunciation.<br>● Participate in short conversations.<br>● Describe people, objects and events using adjectives, adverbs and prepositions.<br>● Talk about present, past and future events.<br>● Sing or recite a song/chant by listening to the teacher or an audio.<br>**Reading**<br>● Read multi-syllabic words composed of roots, prefixes, and suffixes.<br>● Read common abbreviations (e.g., Dr., Mr., AM, and PM).<br>● Perform rhymes and chants with appropriate rhyme and rhythm.<br>● Guess the meaning of unfamiliar words from contexts.<br>● Read poems and short stories for pleasure.<br>**Writing**<br>● Connect sentences using simple coordinators (e.g. and, but, |

| | | | | |
|---|---|---|---|---|
| | • फलेक, बेन्च वा तेर्सो काठमा हिँड्ने अभ्यास गर्न<br>• हातले टेकी छेउबाट पल्टने कार्य गर्न | | | because).<br>• Write in a simple paragraph about oneself, people, places and things.<br>• Use correct spelling of words.<br>• Use words in meaningful sentences.<br>• Make compound words e.g. roundtable, playground, etc.<br>• Write very short simple messages.<br>• Demonstrate good handwriting skills. |
| ५. हाम्रा वरपरका सजीवहरु (Living things around us) | • आधारभूत लक्षणहरू (चाल, शरीरका भागहरू र खाना प्राप्त गर्ने तरिका) का आधारमा बिरुवा र जनावरबिच भिन्नता छुट्याउन<br>• बिरुवाहरूलाई वर्गीकरण गर्न ( फूल फुल्ने/फूल नफुल्ने जमिनमा पाइने/पानीमा पाइने, एकवर्षे/बहुवर्षे)<br>• विभिन्न मौसममा पाइने बिरुवाहरू चिन्न<br>• विभिन्न मौसममा पाइने बिरुवाहरूको सूची तयार गर्न<br>• बिरुवा रोप्न<br>• आफुले रोपेको बिरुवाको आवश्यक हेरचाह गर्न<br>• आफुले रोपेको बिरुवाको समय समयमा आउने परिवर्तन अवलोकन गरी अभिलेख राख्न<br>• खाद्य शृङ्खलाको साधारण उदाहरण दिन | | | |
| ६. हाम्रो वातावरण (Our environment) | • विद्यालय, घर, छरछिमेक र टोलको सरसफाइमा सहभागी हुन<br>• आफ्नो वरपरको वातावरण प्रदूषणका कारणहरू पहिचान गर्न<br>• वातावरणीय स्वच्छताप्रति सजग रही प्रदूषण रोक्न सहयोग गर्न<br>• कुहिने र नकुहिने फोहोरहरुको बर्गीकरण र उचित विसर्जन गर्न<br>• आफ्नो समुदायमा भएका प्राकृतिक सम्पदाको संरक्षण र प्रयोग गर्न | | **ध्वनि सचेतीकरण**<br>• पाठमा प्रयुक्त समान र असमान ध्वनि भएका शब्दहरू पहिचान र उच्चारण गर्न<br>**श्रव्य/दृश्यबोध**<br>• विभिन्न दृश्य सूचना तथा सामग्रीबारे प्रतिक्रिया दिन<br>**लेख्यवर्ण सचेतीकरण**<br>• संयुक्त वर्ण संरचना भएका शब्दका सुरु र अन्त्यका वर्ण छुट्याएर र जोडेर पढ्न तथा लेख्न<br>• वस्तु र चित्रका नाम भन्न र लेख्न<br>**शब्दभण्डार**<br>• शब्दहरूको अर्थबोध गरी वाक्यमा प्रयोग गर्न<br>• विभिन्न सन्दर्भमा प्रयोग हुने शब्दहरू पढी वाक्यमा प्रयोग गर्न<br>**पठन प्रवाह**<br>• हाउभाउ, गति र शुद्धतासहित गद्य रचनाको सस्वर र द्रुत पठन गर्न | **Language functions**<br>Describing people and places<br>Talking about seasons<br>Giving directions<br>**Listening**<br>• Listen and respond to a wide variety of spoken stimuli (words, sentences, questions, instructions, etc.) both verbally and non-verbally.<br>• Find out specific information (names, dates, time, etc) from different kinds of simple spoken language.<br>• Listen in order to participate in a variety of short conversations.<br>• Perform a variety of listening comprehension tasks.<br>• Listen and comprehend a range of songs and stories with a |

| | | | | |
|---|---|---|---|---|
| | • वरपरका वस्तु तथा घटनाहरू सम्बन्धी खोजमूलक प्रश्न गर्न, अनुमान गर्न, अवलोकन गर्न र तर्क प्रस्तुत गर्न<br>• ठोस, तरल र ग्यास पदार्थका आधारभूत गुणहरूको अवलोकन र परीक्षण गर्न<br>• विभिन्न वस्तुहरुको प्रयोग गरी झुण्डाउन मिल्ने खालका सजावटका सामग्रीहरु निर्माण गर्न | | • हाउभाउ, गति, यति, लय र शुद्धतासहित पद्य रचनाको सस्वर, युगल, सामूहिक, स्वतन्त्र र द्रुत पठन गर्न<br>**पठन बोध**<br>• शब्द र पदावलीको अर्थ बुझेर प्रयोग गर्न<br>• पाठ पढी सोधिएका प्रश्नको उत्तर दिन<br>• पाठका आधारमा घटना वर्णन, अनुभव वर्णन र बुँदा लेखन गर्न<br>**लेखाइ**<br>• पाठसित सम्बन्धित प्रश्नका उत्तर लेख्न<br>• अन्य विषयका शीर्षक तथा विषयवस्तुका आधारमा स्वतन्त्र लेखन गर्न<br>**कार्यमूलक व्याकरण**<br>• लिङ्ग, वचन, पुरुष र आदरको प्रयोग गरी लिखित अभिव्यक्ति दिन<br>• पूर्णविराम, अल्पविराम, प्रश्नवाचक, विस्मयादिबोधक र उद्धरण चिह्नको प्रयोग गरी लिखित अभिव्यक्ति दिन<br>• क्रियाका कालअनुसारका वाक्यको प्रयोग गरी मौखिक तथा लिखित अभिव्यक्ति दिन | variety of visual clues.<br>**Speaking**<br>• Produce words, phrases, simple sentences with intelligible pronunciation.<br>• Participate in short conversations.<br>• Ask and answer a range of questions.<br>• Describe people, objects and events using adjectives, adverbs and prepositions.<br>• Sing or recite a song/chant by listening to the teacher or an audio.<br>**Reading**<br>• Read multi-syllabic words composed of roots, prefixes, and suffixes.<br>• Perform rhymes and chants with appropriate rhyme and rhythm.<br>• Read short texts silently and find out the main ideas and supporting details of the text.<br>• Guess the meaning of unfamiliar words from contexts.<br>• Consult dictionary to find out the meaning of words.<br>• Read poems and short stories for pleasure.<br>**Writing**<br>• Use capital letters, full stops and question marks correctly.<br>• Connect sentences using simple coordinators (e.g. and, but, because).<br>• Use correct spelling of words.<br>• Use regular and irregular plural nouns.<br>• Use words in meaningful sentences.<br>• Make compound words e.g. roundtable, playground, etc.<br>• Write very short simple messages.<br>• Demonstrate good handwriting skills. |
| ७. मेरा सरसामान (My belongings) | | | | **Language functions**<br>Describing objects<br>Understanding and using numbers (fifty one to hundred)<br>**Listening**<br>• Listen and respond to a wide variety of spoken stimuli (words, sentences, questions, instructions, etc.) both verbally and non-verbally.<br>• Identify key information from a |

| | | | | |
|---|---|---|---|---|
| | | | | short speech or conversation.<br>• Find out specific information (names, dates, time, etc) from different kinds of simple spoken language.<br>• Perform a variety of listening comprehension tasks.<br>**Speaking**<br>• Produce words, phrases, simple sentences with intelligible pronunciation.<br>• Ask and answer a range of questions.<br>• Describe people, objects and events using adjectives, adverbs and prepositions.<br>• Sing or recite a song/chant by listening to the teacher or an audio.<br>**Reading**<br>• Read short texts silently and retrieve specific information (name, number, etc.).<br>• Guess the meaning of unfamiliar words from contexts.<br>• Consult dictionary to find out the meaning of words.<br>• Read poems and short stories for pleasure.<br>**Writing**<br>• Connect sentences using simple coordinators (e.g. and, but, because).<br>• Write in a simple paragraph about oneself, people, places and things.<br>• Use correct spelling of words.<br>• Use regular and irregular plural nouns.<br>• Use words in meaningful sentences.<br>• Make compound words e.g. roundtable, playground, etc.<br>• Write very short simple messages.<br>• Demonstrate good handwriting skills. |
| ८. मेरो सिर्जना (My creation) | • राष्ट्रिय गान, कक्षागत गीत, पाठ्यपुस्तकमा भएका बालगीतहरू लय मिलाई गाउन<br>• तालमा ताली बजाउन<br>• स्थानीय गीतमा नृत्य गर्न<br>• स्थानीय बाजाहरू बजाउने अभ्यास गर्न<br>• कागज र सिन्का | • दिइएको वस्तुको किनारा वा रेखाखण्डको नाप लिन र दिइएको नापको रेखाखण्ड खिच्न<br>• वरपर पाइने ठोस वस्तुमा बनेका कोणहरू देखाउन<br>• रुलरको प्रयोग गरी कोणहरू खिच्न, नाम लेख्न र तुलना गर्न | **ध्वनि सचेतीकरण**<br>• पाठमा प्रयुक्त समान र असमान ध्वनि भएका शब्दहरू पहिचान गरी उच्चारण गर्न<br>• अनुच्छेद सुनी मुख्य मुख्य शब्द पहिचान र उच्चारण गर्न<br>**श्रव्य/दृश्यबोध**<br>• सञ्चारका क्रममा प्रचलित आकृति, रङ र सङ्केत चिह्नको प्रयोग गर्न<br>• दिइएका सामग्रीका आधारमा | |

| | | | | |
|---|---|---|---|---|
| | प्रयोग गरी विभिन्न वस्तुको निर्माण गर्न<br>• स्लेब (slab) मा विभिन्न प्रकारका आकृति वा फलफूलका बुट्टा बनाउन, माटोबाट विभिन्न आकारका मोडेलहरु बनाउन र वस्तुमा रङको प्रयोग गर्न<br>• माटामा रेखा, आकार, टेक्सचर र बुट्टासम्बन्धी विविध प्रयोगहरू गर्न<br>• माटाका स्ल्याब (clay slabs) मा माटोलाई बेरेर (coils) बनाइएका बुट्टाहरू तथा ससाना गोलाहरू (pellets) द्वारा अलङ्करण गर्न | • समकोण पहिचान गर्न<br>• सिधा किनारा (straight edge) भएको वस्तु र सिसाकलम प्रयोग गरी त्रिभुज र चतुर्भुज खिच्न र नाम लेख्न<br>• आयताकार र वर्गाकार सतह पहिचान गर्न | विषयवस्तुको बोध गरी हाउभाउसहित वर्णन गर्न<br>**लेख्यवर्ण सचेतीकरण**<br>• संयुक्त वर्ण संरचना भएका शब्दका सुरु र अन्त्यका वर्ण छुट्याएर र जोडेर पढ्न तथा लेख्न<br>• वस्तु र चित्रका नाम भन्न र लेख्न<br>**शब्दभण्डार**<br>• पाठमा प्रयोग भएका शब्दहरू अर्थबोध गरी वाक्यमा प्रयोग गर्न<br>• दुई शब्द जोडेर सिङ्गो शब्द बनाई वाक्यमा प्रयोग गर्न<br>**पठन प्रवाह**<br>• हाउभाउ, गति र शुद्धतासहित गद्य रचनाको सस्वर र द्रुत पठन गर्न<br>• हाउभाउ, गति, यति, लय र शुद्धतासहित पद्य रचनाको सस्वर, युगल, सामूहिक, स्वतन्त्र र द्रुत पठन गर्न<br>**पठन बोध**<br>• विषयवस्तुसँग मिल्दाजुल्दा अनुभव वर्णन गर्न<br>• पाठगत सन्दर्भ पहिचान गरी लिखित अभिव्यक्ति दिन<br>• तथ्य, सन्दर्भ, सूचना र पूर्वज्ञानमा आधारित भई मौखिक र लिखित उत्तर दिन<br>• पाठका आधारमा घटना वर्णन, अनुभव वर्णन, बुँदा लेखन र अनुच्छेद लेखन गर्न<br>**लेखाइ**<br>• शीर्षक तथा विषयवस्तुका आधारमा स्वतन्त्र लेखन गर्न<br>• पाठबारे लिखित प्रतिक्रिया दिन<br>• घटना वा छलफल गरिएका विषय वा सिकेका शब्दहरूलाई आफ्नै शब्दमा पुनर्लेखन गर्न<br>**कार्यमूलक व्याकरण**<br>• लिङ्ग, वचन, पुरुष र आदरको प्रयोग गरी लिखित अभिव्यक्ति दिन<br>• पूर्णविराम, अल्पविराम, प्रश्नवाचक, विस्मयादिबोधक र उद्धरण चिह्नको प्रयोग गरी लिखित अभिव्यक्ति दिन<br>• क्रियाका कालअनुसारका वाक्यको प्रयोग गरी मौखिक तथा लिखित अभिव्यक्ति दिन | |
| ९. हाम्रो संस्कृति (Our culture) | • आफ्नो गाउँ टोलमा बोलिने भाषा, पोषाक र चाडपर्वसँग परिचित हुन<br>• आफ्नो गाउँ टोल तथा परिवारमा मनाइने चाडपर्वहरुमा सहभागी हुन र चाडपर्वमा गरिने मुख्य मुख्य क्रियाकलापहरूको सूची तयार गर्न<br>• आफ्ना समुदायका संकारहरु (दशैं, तिहार, छठ, क्रिसमस, इद, | | **ध्वनि सचेतीकरण**<br>• अनुच्छेद सुनी मुख्य मुख्य शब्द पहिचान र उच्चारण गर्न<br>• प्राकृतिक तथा सामाजिक परिवेशलाई चित्रका आधारमा वर्णन गर्न<br>• सम्मानबोधक शब्द सुनी उच्चारण गर्न<br>**श्रव्य/दृश्यबोध**<br>• दिइएका सामग्रीका आधारमा विषयवस्तुको बोध गरी हाउभाउसहित वर्णन गर्न<br>• सञ्चारका क्रममा प्रचलित आकृति, रङ र सङ्केत चिह्नको प्रयोग गर्न<br>**लेख्यवर्ण सचेतीकरण**<br>• शब्दहरूको अर्थबोध गरी पढ्न र लेख्न<br>• शब्दका वर्ण छुट्याएर र वर्ण जोडेर | **Language functions**<br>Narrating past events<br>Asking and answering about past<br>**Listening**<br>• Listen and respond to a wide variety of spoken stimuli (words, sentences, questions, instructions, etc.) both verbally and non-verbally.<br>• Identify key information from a short speech or conversation.<br>• Find out specific information (names, dates, time, etc) from different kinds of simple spoken language. |

| | | | | |
|---|---|---|---|---|
| | विभिन्न जात्रा आदि) को अवस्था झल्कने सामान्य रेखाङ्कन गर्न र रङ भर्न<br>• राष्ट्रिय चिह्नहरूको महत्व बताउन | | पढ्न र लेख्न<br>**शब्दभण्डार**<br>• शब्दहरूको अर्थबोध र प्रयोग गर्न<br>• दुई शब्द वा शब्द समूह जोडेर अर्थबोध र प्रयोग गर्न<br>**पठन प्रवाह**<br>• हाउभाउ, गति र शुद्धतासहित गद्य रचना सस्वर र द्रुत पठन गर्न<br>• हाउभाउ, गति, यति, लय र शुद्धतासहित पद्य रचनाको सस्वर, युगल, सामूहिक, स्वतन्त्र र द्रुत पठन गर्न<br>**पठन बोध**<br>• निर्धारित विषयवस्तुका आधारमा छलफल र प्रश्नोत्तर गर्न<br>• पाठका चरित्र, परिवेश र घटनाको वर्णन गर्न<br>**लेखाइ**<br>• भावविस्तार, शब्दभरण र सार लेखन गर्न<br>• स्थानीय परिवेश, सन्दर्भ तथा विषयवस्तु झल्किने शीर्षक वा विषयवस्तु छनोट गरी अनुच्छेद लेख्न<br>**कार्यमूलक व्याकरण**<br>• लिङ्ग, वचन, पुरुष र आदरको सङ्गतिसहित मौखिक तथा लिखित अभिव्यक्ति दिन<br>• पूर्णविराम, अल्पविराम, प्रश्नवाचक, विस्मयादिबोधक र उद्धरण चिह्नको प्रयोग गरी लिखित अभिव्यक्ति दिन<br>• क्रियाका कालअनुसारका वाक्यको प्रयोग गरी मौखिक तथा लिखित अभिव्यक्ति दिन | • Listen in order to participate in a variety of short conversations.<br>• Perform a variety of listening comprehension tasks.<br>• Listen and comprehend a range of songs and stories with a variety of visual clues.<br>**Speaking**<br>• Produce words, phrases, simple sentences with intelligible pronunciation.<br>• Participate in short conversations.<br>• Ask and answer a range of questions.<br>• Talk about present, past and future events.<br>• Sing or recite a song/chant by listening to the teacher or an audio.<br>**Reading**<br>• Read multi-syllabic words composed of roots, prefixes, and suffixes.<br>• Perform rhymes and chants with appropriate rhyme and rhythm.<br>• Read short texts silently and retrieve specific information (name, number, etc.).<br>• Read short texts silently and find out the main ideas and supporting details of the text.<br>• Guess the meaning of unfamiliar words from contexts.<br>• Retrieve required information from para-orthographic texts such as charts, tables, graphs and maps.<br>• Read poems and short stories for pleasure.<br>**Writing**<br>• Use capital letters, full stops and question marks correctly.<br>• Connect sentences using simple coordinators (e.g. and, but, because).<br>• Write simple stories through completion, matching with pictures or ordering.<br>• Use present (with/without -s/es) and regular past (-ed) forms of verbs<br>• Use words in meaningful sentences.<br>• Write very short simple messages.<br>• Demonstrate good handwriting skills. |
| १०. सञ्चार प्रविधि र | • सार्वजनिक | • रुपियाँलाई पैसामा र | **ध्वनि सचेतीकरण** | **Language functions** |

| | | | | |
|---|---|---|---|---|
| बजार<br>(Communication technology and market) | स्थलहरूको सूचना, सङ्केत, पम्प्लेट, पोस्टर, ट्राफिक सङ्केत आदि पढ्न<br>• सार्वजनिक स्थलहरूको सूचना, सङ्केत, पम्प्लेट, पोस्टर, ट्राफिक सङ्केतको पालना गर्न<br>• सिकाइ एवम् सञ्चारका लागि कम्प्युटर र मोबाइल फोनको प्रयोग गर्न<br>• कम्प्युटर र मोबाइल फोनको दुरूपयोगबाट हुने हानिप्रति सचेत रहन<br>• आफ्नो गापा/ नपामा उत्पादित तथा निर्मित वस्तुहरूको पहिचान गर्न<br>• आफ्नो गापा/ नपामा उत्पादित तथा निर्मित वस्तुहरूको उपयोग गर्न<br>• मितव्ययी रुपमा खर्च गर्न<br>• आफ्नो पैसा बचत गर्ने बानी बसाल्न | पैसालाई रुपियाँमा रूपान्तर गर्न<br>• मुद्रासम्बन्धी जोड र घटाउ गर्न<br>• मिटर, सेन्टिमिटर र मिलिमिटरको सम्बन्ध बताउन<br>• मिटरलाई सेन्टिमिटर र सेन्टिमिटरलाई मिलिमिटरमा रूपान्तर गर्न<br>• वस्तुहरूको तौलको अनुमान गर्न र नापद्वारा यकिन गर्न<br>• किलोग्रामलाई ग्राममा रूपान्तर गर्न<br>• लिटर र मिलिलिटरको सम्बन्ध बताउन<br>• विभिन्न क्षमताका भाँडाहरूको क्षमता लिटर र मिलिलिटर एकाइमा नाप लिन<br>• लिटर र मिलिलिटरसम्बन्धी जोड र घटाउ गर्न<br>• चित्रग्राफ बनाउन । | • शब्द शब्द जोडेर वा छुट्याएर उच्चारण गर्न<br>• अनुमान र कल्पना गरी मौखिक वर्णन गर्न<br>**श्रव्य/दृश्यबोध**<br>• सञ्चारका क्रममा प्रचलित आकृति, रङ र सङ्केत चिह्नको प्रयोग गर्न<br>• निर्धारित पाठ्यसामग्री, चित्र र पत्रपत्रिका पढी बोध गर्न<br>• पाठ सुनी विषयवस्तु वर्णन गर्न<br>**लेख्यवर्ण सचेतीकरण**<br>• दुईओटा शब्द जोडेर वा छुट्याएर शब्द भन्न र लेख्न<br>• शब्दको उच्चारणसहित पढ्न र लेख्न<br>**शब्दभण्डार**<br>• उही तथा उल्टो अर्थ दिने शब्दहरूको अर्थबोध र प्रयोग गर्न<br>• बाल शब्दकोशको प्रयोग गर्न<br>**पठन प्रवाह**<br>• पठन गति वृद्धिका लागि निर्धारित समयमा तोकिएको पाठ वा अनुच्छेद पढ्न<br>• पाठमा दिइएका शब्दको परिभाषा, उदाहरण र विपरीत अर्थबोधक शब्द बुझेर पढ्न<br>**पठन बोध**<br>• विषयवस्तुका आधारमा प्रश्नोत्तर गर्न<br>• चिठी, निवेदन, साइन बोर्ड, पोस्टर, सूचना र अन्य विवरणहरू पढी अर्थबोध गर्न<br>**लेखाइ**<br>• पाठसँग सम्बन्धित भई प्रश्नोत्तर गर्न<br>• दिइएका बुँदाका आधारमा अनुच्छेद लेख्न<br>• स्वतन्त्र रूपमा विभिन्न प्रकारका रचना गर्न<br>**कार्यमूलक व्याकरण**<br>• लिङ्ग, वचन, पुरुष र आदरको सङ्गति मिलाई मौखिक तथा लिखित अभिव्यक्ति दिन<br>• पूर्णविराम, अल्पविराम, प्रश्नवाचक, विस्मयादिबोधक र उद्धरण चिह्नको प्रयोग गरी लिखित अभिव्यक्ति दिन<br>• क्रियाका कालअनुसारका वाक्यको प्रयोग गरी मौखिक तथा लिखित अभिव्यक्ति दिन | Using the telephone<br>Asking and answering with a choice<br>**Listening**<br>• Comprehend words and simple expressions.<br>• Listen and respond to a wide variety of spoken stimuli (words, sentences, questions, instructions, etc.) both verbally and non-verbally.<br>• Identify key information from a short speech or conversation.<br>• Find out specific information (names, dates, time, etc) from different kinds of simple spoken language.<br>• Perform a variety of listening comprehension tasks.<br>• Listen and comprehend a range of songs and stories with a variety of visual clues.<br>**Speaking**<br>• Participate in short conversations.<br>• Ask and answer a range of questions.<br>• Describe people, objects and events using adjectives, adverbs and prepositions.<br>• Talk about present, past and future events.<br>• Sing or recite a song/chant by listening to the teacher or an audio.<br>• Make simple telephone conversation.<br>**Reading**<br>• Perform rhymes and chants with appropriate rhyme and rhythm.<br>• Read short texts silently and retrieve specific information (name, number, etc.).<br>• Read short texts silently and find out the main ideas and supporting details of the text.<br>• Guess the meaning of unfamiliar words from contexts.<br>• Consult dictionary to find out the meaning of words.<br>• Retrieve required information from para-orthographic texts such as charts, tables, graphs and maps.<br>• Read poems and short stories for pleasure.<br>**Writing**<br>• Connect sentences using simple coordinators (e.g. and, but, because).<br>• Write in a simple paragraph about oneself, people, places and |

| | | | | |
|---|---|---|---|---|
| | | | | things.<br>• Use correct spelling of words.<br>• Use regular and irregular plural nouns.<br>• Use words in meaningful sentences.<br>• Make compound words e.g. roundtable, playground, etc.<br>• Write very short simple messages.<br>• Demonstrate good handwriting skills. |
| ११. फलफूल र तरकारी (Fruits and vegetables) | | | | **Language function**<br>Describing pictures<br>**Listening**<br>• Listen and respond to a wide variety of spoken stimuli (words, sentences, questions, instructions, etc.) both verbally and non-verbally.<br>• Identify key information from a short speech or conversation.<br>• Find out specific information (names, dates, time, etc) from different kinds of simple spoken language.<br>• Listen in order to participate in a variety of short conversations.<br>• Perform a variety of listening comprehension tasks.<br>• Listen and comprehend a range of songs and stories with a variety of visual clues.<br>**Speaking**<br>• Produce words, phrases, simple sentences with intelligible pronunciation.<br>• Participate in short conversations.<br>• Ask and answer a range of questions.<br>• Describe people, objects and events using adjectives, adverbs and prepositions.<br>• Sing or recite a song/chant by listening to the teacher or an audio.<br>**Reading**<br>• Perform rhymes and chants with appropriate rhyme and rhythm.<br>• Read short texts silently and retrieve specific information (name, number, etc.).<br>• Read short texts silently and find out the main ideas and supporting details of the text.<br>• Guess the meaning of unfamiliar words from contexts.<br>• Consult dictionary to find out the meaning of words.<br>• Read poems and short stories for |

| | | | | pleasure.<br>**Writing**<br>• Connect sentences using simple coordinators (e.g. and, but, because).<br>• Write in a simple paragraph about oneself, people, places and things.<br>• Use correct spelling of words.<br>• Use regular and irregular plural nouns.<br>• Arrange words in alphabetical order.<br>• Use words in meaningful sentences.<br>• Make compound words e.g. roundtable, playground, etc.<br>• Write very short simple messages.<br>• Demonstrate good handwriting skills. |
|---|---|---|---|---|
| १२. रुचि र बानी (Hobbies and interests) | | | **ध्वनि सचेतीकरण**<br>• पाठमा प्रयुक्त समान र असमान ध्वनि भएका शब्दहरू पहिचान गरी उच्चारण गर्न<br>• अनुच्छेद सुनी मुख्य मुख्य शब्द पहिचान र उच्चारण गर्न<br>**श्रव्य/दृश्यबोध**<br>• सञ्चारका क्रममा प्रचलित आकृति, रङ र सङ्केत चिह्नको प्रयोग गर्न<br>• दिइएका सामग्रीका आधारमा विषयवस्तुको बोध गरी हाउभाउसहित वर्णन गर्न<br>**लेख्यवर्ण सचेतीकरण**<br>• संयुक्त वर्ण संरचना भएका शब्दका सुरु र अन्त्यका वर्ण छुट्याएर र जोडेर पढ्न तथा लेख्न<br>• वस्तु र चित्रका नाम भन्न र लेख्न<br>**शब्दभण्डार**<br>• आफ्नो परम्परा र रीतिरिवाजको वर्णन गर्न<br>• सम्मानबोधक शब्द प्रयोग गरी वाक्य भन्न र लेख्न<br>**पठन प्रवाह**<br>• हाउभाउ, गति र शुद्धतासहित गद्य रचना सस्वर र द्रुत पठन गर्न<br>• हाउभाउ, गति, यति, लय र शुद्धतासहित पद्य रचना सस्वर, युगल, सामूहिक, स्वतन्त्र र द्रुत पठन गर्न<br>**पठन बोध**<br>• पात्र परिवर्तन गरी पाठ पुनर्लेखन गर्न<br>• पाठगत सन्दर्भ पहिचान गरी लिखित अभिव्यक्ति दिन<br>• तथ्य, सन्दर्भ, सूचना र पूर्वज्ञानमा आधारित भई मौखिक र लिखित उत्तर दिन<br>• पाठका आधारमा घटना वर्णन, अनुभव वर्णन, बुँदा लेखन र अनुच्छेद लेखन गर्न<br>**लेखाइ**<br>• पाठमा आधारित प्रश्नको उत्तर लेख्न<br>• आफ्नो परम्परागत मूल्यमान्यता बुझाउने विषयवस्तु छनोट गरी अनुच्छेद लेख्न | **Language function**<br>Expressing likes and dislikes<br>**Listening**<br>• Listen and respond to a wide variety of spoken stimuli (words, sentences, questions, instructions, etc.) both verbally and non-verbally.<br>• Identify key information from a short speech or conversation.<br>• Find out specific information (names, dates, time, etc) from different kinds of simple spoken language.<br>• Perform a variety of listening comprehension tasks.<br>• Listen and comprehend a range of songs and stories with a variety of visual clues.<br>**Speaking**<br>• Ask and answer a range of questions.<br>• Describe people, objects and events using adjectives, adverbs and prepositions.<br>• Talk about present, past and future events.<br>• Sing or recite a song/chant by listening to the teacher or an audio.<br>**Reading**<br>• Perform rhymes and chants with appropriate rhyme and rhythm.<br>• Read short texts silently and retrieve specific information (name, number, etc.).<br>• Read short texts silently and find out the main ideas and supporting details of the text.<br>• Guess the meaning of unfamiliar words from contexts.<br>• Consult dictionary to find out the meaning of words. |

| | | | | |
|---|---|---|---|---|
| | | | **कार्यमूलक व्याकरण**<br>• लिङ्ग, वचन, पुरुष र आदरको सङ्गति मिलाई मौखिक तथा लिखित अभिव्यक्ति दिन<br>• पूर्णविराम, अल्पविराम, प्रश्नवाचक, विस्मयादिबोधक र उद्धरण चिह्नको प्रयोग गरी लिखित अभिव्यक्ति दिन<br>• क्रियाका कालअनुसारका वाक्यको प्रयोग गरी मौखिक तथा लिखित अभिव्यक्ति दिन | • Read poems and short stories for pleasure.<br>**Writing**<br>• Use capital letters, full stops and question marks correctly.<br>• Connect sentences using simple coordinators (e.g. and, but, because).<br>• Write in a simple paragraph about oneself, people, places and things.<br>• Write simple stories through completion, matching with pictures or ordering.<br>• Use correct spelling of words.<br>• Use regular and irregular plural nouns.<br>• Use words in meaningful sentences.<br>• Make compound words e.g. roundtable, playground, etc.<br>• Demonstrate good handwriting skills. |
| १३. Birds and animals | | | | **Language function**<br>Expressing ability<br>**Listening**<br>• Listen and respond to a wide variety of spoken stimuli (words, sentences, questions, instructions, etc.) both verbally and non-verbally.<br>• Identify key information from a short speech or conversation.<br>• Find out specific information (names, dates, time, etc) from different dinds of simple spoken language.<br>• Perform a variety of listening comprehension tasks.<br>• Listen and Comprehend a range of songs and stories with a variety of vasual clues.<br>**Speaking**<br>• Participate in short conversations.<br>• Ask and answer a range of questions.<br>• Talk about present, past and future events.<br>• Sing or recite a song/chant by listening to the teacher or an audio.<br>**Reading**<br>• Perform rhymes and chants with appropriate rhyme and rhythm.<br>• Read short texts silently and retrieve specific information (name, number, etc.)<br>• Read short texts silently and find out the main ideas and supporting details of the text.<br>• Consult dictionary to find out the meaning of words.<br>• Retrieve required information from para-orthographic texts such as charts, tables, graphs and maps. |

| | | | | • Read poems and short stories for pleasure.<br>**Writing**<br>• Write simple strough completion, matching with pictures or ordering.<br>• Use regular and irregular plural nouns.<br>• Write very short simple messages.<br>• Demonstrate good handwriting skills. |
|---|---|---|---|---|
| १४. हाम्रो वरपरको संसार (Our immediate world) | • विभिन्न प्रकारका मौसमको विषेशता पहिचान गर्न<br>• विभिन्न प्रकारका मौसमले मानवीय जीवनमा पार्ने असर व्याख्या गर्न<br>• प्रतिकुल मौसमप्रति सचेत रहन<br>• पृथ्वीमा दिन र रात हुनुको कारण बताउन<br>• आफ्नो वडाको प्राकृतिक स्वरुप अबलोकन गरी बताउन<br>• आफ्नो वडाको सामाजिक रहनसहन अबलोकन गरी बताउन<br>• नक्सामा आफ्नो वडाका सामान्य आकृति कोर्न<br>• नक्सामा आफ्नो वडाका सामान्य आकृति कोरी महत्त्वपूर्ण स्थलहरू देखाउन<br>• माटामा हावा, जैविक पदार्थहरू र पानी हुन्छन् भन्ने तथ्य प्रदर्शन गर्न<br>• पृथ्वीको आकार वर्णन गर्न र भित्री तहहरूको नाम बताउन<br>• दैनिक जीवनमा गतिशील पानी र हावा शक्तिको प्रयोगको व्याख्या गर्न र प्रदर्शन गर्न<br>• पानी संरक्षणको उपायहरू अवलम्बन गर्न<br>• ओरीगामीको परिचय दिन<br>• कागजबाट चराको ओरिगामी तयार गर्न<br>• कागजबाट सजावटका लागि वस्तु तयार गर्न<br>• स्वतन्त्र चित्र बनाइ रङ भर्न | | **ध्वनि सचेतीकरण**<br>• शब्दका अगाडि एवम् पछाडि आएका ध्वनि जोडेर र छुट्याएर भन्न<br>• शब्दको उच्चारणसहित पढ्न र लेख्न<br>**श्रव्य/दृश्यबोध**<br>• दृश्य सामग्रीका बारेमा प्रतिक्रिया दिन<br>• निर्धारित पाठ्यसामग्री, चित्र र पत्रपत्रिका पढी बोध गर्न<br>**लेख्यवर्ण सचेतीकरण**<br>• शब्दका अगाडि एवम् पछाडि आएका सर्ग चिन्न र भन्न<br>• शब्दका अगाडि एवम् पछाडि आएका सर्ग छुट्याउन तथा जोडेर शब्द बनाउन<br>**शब्दभण्डार**<br>• शब्दको अर्थबोध र प्रयोग गर्न<br>• दुई शब्द वा शब्द समूह जोडेर अर्थबोध र प्रयोग गर्न<br>**पठन प्रवाह**<br>• निर्धारित समयमा तोकिएको पाठ वा अनुच्छेद पढ्न<br>• पाठमा दिइएका शब्दको परिभाषा, उदाहरण र विपरीत अर्थबोधक शब्द बुझेर पढ्न<br>**पठन बोध**<br>• पाठका सुरु, बिच र अन्त्यका मुख्य मुख्य घटना बताउन<br>• पाठका विषयवस्तुका आधारमा प्रश्नोत्तर गर्न<br>• निर्धारित पाठको मुख्य मुख्य बुँदा टिपोट गरी भन्न तथा लेख्न<br>**लेखाइ**<br>• पाठसँग सम्बन्धित प्रश्नका उत्तर लेख्न<br>• दिइएका बुँदाका आधारमा अनुच्छेद लेख्न<br>• स्वतन्त्र रूपमा विभिन्न प्रकारका रचनात्मक लेखन अभ्यास गर्न<br>**कार्यमूलक व्याकरण**<br>• लिङ्ग, वचन, पुरुष र आदरको सङ्गति मिलाई मौखिक तथा लिखित अभिव्यक्ति दिन<br>• पूर्णविराम, अल्पविराम, प्रश्नवाचक, विस्मयादिबोधक र उद्धरण चिह्नको प्रयोग गरी लिखित अभिव्यक्ति दिन<br>• क्रियाका कालअनुसारका वाक्यको प्रयोग गरी मौखिक तथा लिखित अभिव्यक्ति दिन | |

| | | | | |
|---|---|---|---|---|
| १५. हाम्रा क्रियाकलाप (Our activities) | | | **ध्वनि सचेतीकरण**<br>● शब्दका अगाडि एवम् पछाडि आएका ध्वनि जोडेर र छुट्याएर भन्न<br>● शब्दको उच्चारणसहित पढ्न र लेख्न<br>**श्रव्य/दृश्यबोध**<br>● दृश्य सामग्रीका बारेमा प्रतिक्रिया दिन<br>● निर्धारित पाठ्यसामग्री, चित्र र पत्रपत्रिका पढी बोध गर्न<br>**लेख्यवर्ण सचेतीकरण**<br>● शब्दका अगाडि एवम् पछाडि आएका सर्ग चिन्न र भन्न<br>● शब्दका अगाडि एवम् पछाडि आएका सर्ग छुट्याउन तथा जोडेर शब्द बनाउन<br>**शब्दभण्डार**<br>● उही तथा उल्टो अर्थ दिने शब्दहरूको अर्थबोध र प्रयोग गर्न<br>● बाल शब्दकोशको प्रयोग गर्न<br>**पठन प्रवाह**<br>● निर्धारित समयमा तोकिएको पाठ वा अनुच्छेद पढ्न<br>● पाठमा दिइएका शब्दको परिभाषा, उदाहरण र विपरीत अर्थबोधक शब्द बुझेर पढ्न<br>**पठन बोध**<br>● पाठका सुरु, बिच र अन्त्यका मुख्य मुख्य घटना बताउन<br>● पाठका विषयवस्तुका आधारमा प्रश्नोत्तर गर्न<br>● निर्धारित पाठको मुख्य मुख्य बुँदा टिपोट गरी भन्न तथा लेख्न<br>**लेखाइ**<br>● पाठसँग सम्बन्धित प्रश्नका उत्तर लेख्न<br>● दिइएका बुँदाका आधारमा अनुच्छेद लेख्न<br>● स्वतन्त्र रूपमा विभिन्न प्रकारका रचनात्मक लेखन अभ्यास गर्न<br>**कार्यमूलक व्याकरण**<br>● लिङ्ग, वचन, पुरुष र आदरको सङ्गति मिलाई मौखिक तथा लिखित अभिव्यक्ति दिन<br>● पूर्णविराम, अल्पविराम, प्रश्नवाचक, विस्मयादिबोधक र उद्धरण चिह्नको प्रयोग गरी लिखित अभिव्यक्ति दिन<br>● क्रियाका कालअनुसारका वाक्यको प्रयोग गरी मौखिक तथा लिखित अभिव्यक्ति दिन | |
| १६. सङ्ख्याको ज्ञान | | ● पाँच अङ्कसम्मका सङ्ख्याहरूलाई देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कन पद्धतिमा स्थानमान तालिकामा प्रस्तुत गर्न, स्थानमान भन्न, पढ्न र लेख्न<br>● १००० सम्मका सङ्ख्याहरूलाई देवनागरी र हिन्दु अरेबिक सङ्ख्याङ्कन पद्धतिअनुसार अक्षरमा पढ्न र लेख्न<br>● सङ्ख्याको ढाँचा पहिचान गर्न<br>● चार अङ्कसम्मका | | |

| | | | | |
|---|---|---|---|---|
| | | सङ्ख्याहरूलाई सङ्केतहरू =, >, < प्रयोग गरी तुलना गर्न | | |
| १७. गणितका आधारभूत क्रिया | | • योगफल १०,००० सम्म आउने चार अङ्कसम्मका सङ्ख्याहरूको जोड गर्न<br>• जोड र घटाउबिचको सम्बन्ध पहिचान गर्न<br>• चार अङ्कले बनेका सङ्ख्याहरूको घटाउ गर्न<br>• तीन अङ्कसम्मको सङ्ख्यालाई दुई अङ्कसम्मको सङ्ख्याले गुणन गर्न<br>• तीन अङ्कसम्मको सङ्ख्यालाई १० सम्मको सङ्ख्याले भाग गर्न | | |
| १८. नाप | | • वर्ग कोठाहरूको सङ्ख्या गनेर वर्गाकार वा आयताकार समतलीय सतहको क्षेत्रफल पत्ता लगाउन | | |

## १२.२ थिम/विषयक्षेत्रअनुसार अनुमानित कार्यघण्टा

**तालिका २४ : थिम/विषयक्षेत्रअनुसार अनुमानित कार्यघण्टा**

| क्र. सं. | थिम/विषयवस्तुको क्षेत्र | विषयक्षेत्र र कक्षाअनुसार कार्यघण्टा | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | हाम्रो सेरोफेरो | | | गणित | | | नेपाली | | | अङ्ग्रेजी | | |
| | | कक्षा १ | कक्षा २ | कक्षा ३ | कक्षा १ | कक्षा २ | कक्षा ३ | कक्षा १ | कक्षा २ | कक्षा ३ | कक्षा १ | कक्षा २ | कक्षा ३ |
| १. | वर्ण (Alphabet) | | | | | | | | | | ६० | | |
| २. | म र मेरो परिवार (Me and my family) | ४० | ४० | ४० | २५ | ७ | | १५ | १५ | १५ | १८ | २१ | १८ |
| ३. | मेरो दैनिक जीवन (My daily life) | ४५ | ४० | ४० | ५ | ६ | ८ | ११ | १० | १० | ७ | १७ | १७ |
| ४. | हाम्रो समुदाय (Our community) | ३८ | ४० | ४० | ५५ | १३ | २० | १२ | १५ | १५ | | | |
| ५. | मेरो विद्यालय (My school) | ३८ | ४० | ४० | २७ | १९ | | १२ | १५ | १५ | ७ | १७ | १७ |
| ६. | हाम्रा वरपरका सजीवहरू (Living things around us ) | १७ | १७ | १७ | | | | | | | | | |
| ७. | हाम्रो वातावरण (Our environment) | १८ | २० | २० | | | | २० | २० | २० | ५ | २१ | १८ |
| ८. | मेरो सरसमान (My belongings) | | | | | | | | | | ५ | ८ | १२ |
| ९. | मेरो सिर्जना (My creation) | २० | २० | २० | ९ | ७ | १६ | १५ | १५ | १५ | | | |
| १०. | हाम्रो संस्कृति (Our culture) | १२ | १२ | १२ | | | | १५ | १५ | १५ | ४ | १२ | १२ |
| ११. | सञ्चार प्रविधि र बजार (Communication technology and market) | ११ | १० | १० | ७ | १२ | २७ | १५ | १० | १० | ४ | ७ | ११ |
| १२. | हाम्रो वरपरको संसार (Our immediate world) | १७ | १७ | १७ | | | | १५ | १५ | १५ | | | |
| १३. | सङ्ख्याको ज्ञान (Number sense) | | | | | १८ | १५ | | | | | | |
| १४. | गणितका आधारभूत क्रिया (Basic mathematics operation) | | | | | ४६ | ३९ | | | | | | |
| १५. | नाप; क्षेत्रफल (Measurement; Area) | | | | | | ३ | | | | | | |
| १६. | फलफूल र तरकारी (Fruits and vegetables) | | | | | | | | | | ६ | ७ | ८ |
| १७. | रुचि र बानी (Hobbies and interests) | | | | | | | १५ | १५ | १५ | ५ | ७ | ८ |
| १८. | चरा र जनावर (Birds and animals) | | | | | | | | | | ७ | ११ | ७ |
| १९. | हाम्रा क्रियाकलाप (Our activities) | | | | | | | १५ | १५ | १५ | | | |
| | जम्मा | २५६ | २५६ | २५६ | १२८ | १२८ | १२८ | १६० | १६० | १६० | १२८ | १२८ | १२८ |

## १२.३ कक्षा १-३ को पाठ्यक्रममा व्यवहारकुशल सिपहरूको एकीकरण

**तालिका २५ : पाठ्यक्रममा व्यवहारकुशल सिपहरूको एकीकरण (कक्षा १, २ र ३)**

| क्र.स. | विषयक्षेत्र/ विषयक क्षेत्र | एकीकृत हुने व्यवहारकुशल सिपहरू | | | |
|---|---|---|---|---|---|
| | | हाम्रो सेरोफेरो | गणित | नेपाली | अङ्ग्रेजी |
| १. | वर्ण (Alphabet) | | | | S1.5, S3.1, S3.4, S3.2, S4.1 |
| २. | म र मेरो परिवार (Me and my family) | S1.1, S1.2, S3.1, S3.4 | S1.4, S1.5, S3.1, S3.2 | S3.1, S 1.2, S 1.1, S 3.2, S 4.3 | S1.5, S2.1, S2.3,S3.1, S3.2, S3.4, S5.4, S5.7 |
| ३. | मेरो दैनिक जीवन (My daily life) | S2.1, S4.3, S4.4, S5.7 | S1.1, S1.2, S1.3, S3.1 | S 2.1, S 1.1, S 4.3, S 3.2, S4.1 | S3.1, S3.2, S3.3, S3.4, S5.3 |
| ४. | हाम्रो समुदाय (Our community) | S1.1, S3.2, S3.3, S5.4, S5.3 | S1.1, S1.2, S1.3, S1.4, S1.5, S3.1, S3.2 | S 4.3, S 1.1, S 1.2, S5.3, S5.4, S5.7 | |
| ५. | मेरो विद्यालय (My school) | S1.1, S1.2, S2.3 | S1.1, S1.2, S1.3, S1.4, S1.5 | S 4.3, S 4.4, S 1.1, S 3.2 | S1.1, S1.5, S2.1, S2.5, S2.6, S2.7, S3.1, S3.2, S3.4, S4.3, S5.2, S5.3, S5.6 |
| ६. | हाम्रा वरपरका सजिवहरू (Living things around us ) | S1.2, S1.3, S1.4 | | | |
| ७. | हाम्रो वातावरण (Our environment) | S5.4, S5.7 | | S 4.3, S 1.3, S 4.4, S 3.1, S 1.1, S 3.2 | S1.3, S2.7, S3.1, S3.2, S3.4, S4.4, S5.2, S5.4 |
| ८. | मेरो सरसमान (My belongings) | | | | S2.1, S2.3, S3.1, S3.2, S3.4, S4.4, S5.7 |
| ९. | मेरो सिर्जना (My creation) | S1.2, S1.3, S3.4 | S1.1, S1.2, S1.4, S3.2 | S 3.2, S 1.1, S 3.1, S 1.3, S 3.3 | |
| १०. | हाम्रो संस्कृति (Our culture) | S2.3, S3.5, S5.2, S5.6 | | S 1.1, S 3.1, S 4.5, S 1.5, S 3.2, S 4.3 | S1.2, S2.1, S2.4, S3.1, S3.3, S3.5, S5.1, S5.2, S5.5 |
| ११. | सञ्चार प्रविधि र बजार (Communication technology and market) | S3.1, S4.2 | S1.1, S1.2, S1.3, 1.4, S3.2, S4.3, S4.4 | S 1.1, S 2.4, S 1.1, S 3.1, S 3.2, S 4.3, S5.2, S5.5 | S2.1, S2.2, S2.4, S3.1, S4.2, S4.5 |
| १२. | हाम्रो वरपरको संसार (Our immediate world) | S1.1, S1.2 | | S 1.1, S 1.5, S 5.1, S 3.2, S 4.3 | |
| १३. | सङ्ख्याको ज्ञान (Number sense) | | S1.1, S1.2, S1.3, S1.4 | | |
| १४. | गणितका आधारभूत क्रिया (Basic mathematical operation) | | S1.2, S1.3, S3.2 | | |
| १५. | नाप : क्षेत्रफल (Measurement; Area) | | S1.1 | | |
| १६. | फलफूल र तरकारी (Fruits and vegetables) | | | | S1.3, S1.5, S3.1, S4.4, S5.6, S5.7 |
| १७. | रुचि र बानी (Hobbies and interests) | | | S 1.1, S 3.1, S 4.3, S 1.5, S 3.2 | S1.3, S2.2, S2.3, S3.1, S3.2 |
| १८. | चरा र जनावर (Birds and animals) | | | | S1.4, S2.6, S3.1, S3.4, S5.4 |
| १९. | हाम्रा क्रियाकलाप (Our activities) | | | S 1.1, S 3.1, S 4.3, S 1.5, S 3.2, S5.3 | |

(तालिकामा उल्लिखित S1.1, S1.2, ... S5.5 ले खण्ड ११ मा समावेश भएका व्यवहारकुशल सिपहरू जनाउँछन् ।

## १३. एकीकृत पाठ्यक्रम कार्यन्वयनका लागि शिक्षण सिकाइ योजना निर्माण

आधारभूत तहअन्तर्गत कक्षा १-३ को पाठ्यक्रमको समग्र संरचनालाई हाम्रो सेरोफेरो, गणित र भाषाअन्तर्गत नेपाली र अङ्ग्रेजी गरी चार विषयक्षेत्रमा समायोजन गरी केही बहुविषयगत र केही विषयगत विषयक्षेत्रमा सङ्गठित गरिएको छ । मातृभाषा तथा स्थानीय विषयका पाठ्यक्रम भने सम्बन्धित स्थानीय तहमार्फत नै विकास र कार्यान्वयन हुने व्यवस्था रहेको छ । बहुविषयक ढाँचाअन्तर्गत समावेश गरिएका सिकाइ उपलब्धि तथा विषयवस्तुहरू अन्तरसम्बन्धित विषयक्षेत्रमा आधारित छन् । हाम्रो सेरोफेरो विषयक्षेत्रमा समावेश भएका विषयहरूलाई अन्तरविषयक ढाँचामा एकीकृत गरिएको हुँदा यस विषयक्षेत्रको शिक्षण सिकाइ क्रियाकलाप एकीकृत रूपमा सञ्चालन गर्नुपर्दछ । एकीकृत सिकाइ क्रियाकलापको माध्यमबाट निर्धारित सिकाइ उपलब्धि प्राप्त हुने सुनिश्चित गरी सिकाइ क्रियाकलाप छनोट र सञ्चालन गर्नुपर्दछ । निश्चित विषयक्षेत्रमा आधारित बहुविषयगत एकीकरणले सिकाइलाई अन्तरसम्बन्धित र बढी सान्दर्भिक बनाउन सहयोग पुऱ्याउँछ । सिकाइको योजना निर्माण गर्दा शिक्षकले निम्नलिखित पक्षहरूलाई समेत ध्यान दिनुपर्छ :

१. सिकाइको योजना निर्माणका लागि विषयगत सक्षमताहरू र समग्र पाठ्यक्रम संरचनाको अध्ययन गरी तिनको अन्तरसम्बन्ध पहिचान गर्नुपर्छ ।

२. अन्तरविषयक विषयक्षेत्रमा आधारित हाम्रो सेरोफेरो विषयक्षेत्रमा विषयगत सीमा निर्धारण नगरी एउटै विषयवस्तुबाट सकेसम्म एकभन्दा बढी विषय अन्तरसम्बन्धित हुने गरी सिकाइको योजना निर्माण गर्नुपर्छ ।

३. बहुविषयक विषयक्षेत्रमा आधारित भई हाम्रो सेरोफेरो, गणित, नेपाली र अङ्ग्रेजी विषयक्षेत्रमा सिकाइ योजना निर्माण गर्दा विषयवस्तुलाई दैनिक जीवनसँग अधिकतम सम्बन्ध कायम हुने गरी निर्धारित विषयक्षेत्रको वरिपरि आआफ्नो विषयक्षेत्रगत अवधारणा तथा सिपहरू हासिल गराई निर्धारित सिकाइ उपलब्धि प्राप्त हुने व्यवस्था मिलाउनुपर्छ ।

४. छनोट गरिएका विधि, प्रक्रिया तथा क्रियाकलापहरूले विद्यार्थीलाई सक्रिय बनाउने, सबैलाई सहभागी बनाउने, गरेर तथा छोएर वा चलाएर सिक्ने र सिर्जनात्मकताको अभिवृद्धि हुने अवसर प्रदान गर्नुपर्छ ।

५. सिकाइ क्रियाकलापले विद्यार्थीहरूमा उमेर र आवश्यकताअनुसार प्रयोग, सिकाइ, रचनात्मक तथा  समालोचनात्मक सोचाइ, निर्णय तथा समस्या समाधान जस्ता सोचाइ सिपहरू; स्वव्यवस्थापन, आत्मबल, अनुशासन, जिम्मेवारी अनुकूलता जस्ता वैयक्तिक सिपहरू; सञ्चार, सहकार्य, सहानुभूति जस्ता अन्तरवैयक्तिक सिपहरू; विभिन्न किसिमका बहुसाक्षरता सिपहरू र नागरिक दायित्वसम्बन्धी विभिन्न किसिमका नागरिक सिप प्राप्तिलाई सहयोग गर्नुपर्छ ।

६. विद्यार्थीहरूको भाषिक तथा सामाजिक पृष्ठभूमि, सिकाइका लागि विभिन्न किसिमको अपाङ्गताको अवस्था इत्यादिलाई विचार गरी विविधताको व्यवस्थापन गर्ने र सबैलाई समावेश गर्ने गरी शिक्षण सिकाइको योजना निर्माण गर्नुपर्छ ।

७. विद्यार्थीको सिकाइको लेखाजोखा तथा मूल्याङ्कनलाई शिक्षण सिकाइ क्रियाकलापको अभिन्न अङ्गका रूपमा समावेश गरी विद्यार्थीको सिकाइ सुधारका लागि निरन्तर पृष्ठपोषण प्रदान गर्ने माध्यमका रूपमा विकास गर्नुपर्दछ । न्यूनतम सिकाइ सुनिश्चित गरी प्रत्येक विद्यार्थीलाई उच्चस्तरको सिकाइ सक्षमता प्राप्त गरी क्रमश: माथिल्लो स्तरको सिकाइ गर्न सक्ने बनाउन सहयोग गर्नुपर्छ ।

८. यथाशक्य कक्षा शिक्षणको प्रबन्ध गर्नुपर्दछ । एकभन्दा बढी शिक्षकले एउटै कक्षामा विभिन्न समयमा शिक्षण गर्ने गरिए पनि टिममा छलफल गरी अन्तरविषयक र बहुविषयक शिक्षण योजना तयार गर्नुपर्छ ।

९. कक्षामा प्रयोग गरिने भाषाको कारण बालबालिकालाई सिकाइ क्रियाकलापमा सरिक हुन र सिक्न बाधा नहुने अवस्था सिर्जना गर्नुपर्छ । यसका लागि कक्षामा यथासक्य मातृभाषा वा बहुभाषा प्रयोग गर्ने, घरपरिवार तथा समुदायमा बोलिने भाषामा सञ्चार हुनसक्ने प्रबन्ध गर्नुपर्छ ।

## १४. सिकाइ सहजीकरण विधि तथा प्रक्रिया

अपेक्षित सक्षमता र सिकाइ उपलब्धि प्राप्तिका निम्ति उपयुक्त वातावरणको सिर्जना गरी शिक्षक, विद्यार्थी र विषयवस्तुबिच सक्रिय अन्तर्क्रिया गर्ने विधि वा प्रक्रिया सिकाइ सहजीकरण हो । यो एक प्रकारको शिक्षण कला हो । यसमा सिकाइ र बालमनोविज्ञानका निश्चित विधि तथा प्रक्रिया र सिद्धान्त पनि अनुसरण गरिने भएकाले यो एक विज्ञान तथा सिद्धान्त पनि हो । सिकाइ सहजीकरण प्रक्रिया विद्यार्थीकेन्द्रित, सान्दर्भिक र सिकाइका निम्ति सहयोगी हुनुपर्छ । यो योजनाबद्ध र सिकाइ उपलब्धि उन्मुख वा प्रतिफल केन्द्रित हुनुपर्छ । सहजीकरण प्रक्रिया विद्यार्थीलाई उत्प्रेरित गर्ने, सक्रिय बनाउने र रुचि जगाउने पनि हुनुपर्छ । यस प्रक्रियामा विद्यार्थी सक्रिय भई सिकाइ क्रियाकलापमा संलग्न हुने र आवश्यकताअनुसार पृष्ठपोषण प्राप्त गरी सिकाइमा सुधार गर्न सक्ने अवसर हुनुपर्दछ । यो प्रक्रिया सिकारु र सिकाइका विविधतालाई सम्मान गर्ने र सबैलाई समावेश गर्ने समावेशी सिद्धान्तमा आधारित पनि हुनुपर्छ ।

एउटै प्रकारको सिकाइ सहजीकरण विधि सधैँ र सबैतिर उपयुक्त हुन नसक्ने भएकाले एउटै विषयवस्तु सिकाइका लागि पनि विविध विधि अपनाउन सकिन्छ  । त्यसैले शिक्षण विधिको छनोट गर्दा सकभर विविधता कायम गर्नुपर्छ । सिकाइसहजीकरण विधिको चयन गर्दा मुख्य रूपमा विद्यार्थीको पूर्व ज्ञान, रुचि, क्षमता, चाहना, उनीहरूको तहगत स्तर, विषयवस्तुको स्वरूपलगायत उपलब्ध हुन सक्ने स्रोतसाधन, वातावरणीय अवस्था, शिक्षकको रुचि तथा तयारी इत्यादिलाई विचार गर्नुपर्दछ ।

आधारभूत शिक्षाअन्तर्गत कक्षा १-३ को यो पाठ्यक्रम समग्रमा बहुविषयक विषयक्षेत्रमा आधारित एकीकृत स्वरूपको भएकाले यसको सिकाइ सहजीकरण प्रक्रिया परम्परागत पद्धतिभन्दा फरक हुनुपर्छ । फेरि हाम्रो सेरोफेरो विषयक्षेत्रअन्तर्गत विज्ञान तथा वातावरण, सामाजिक अध्ययन, स्वास्थ्य तथा शारीरिक शिक्षा र सिर्जनात्मक कला विषयहरू अन्तरविषयक ढाँचामा एकीकृत गरिएको हुनाले पनि प्रचलित सिकाइ सहजीकरण विधि तथा प्रक्रियामा सुधार आवश्यक छ । एकीकृत पाठ्यक्रममा विभिन्न विषयगत क्षेत्रहरूको माध्यमबाट अपेक्षित सिकाइ उपलब्धि प्राप्तिका लागि फरक फरक विषयक्षेत्रहरूबिचको अन्तरसम्बन्ध पहिचान गरी सिर्जनशीलता विकास गर्ने, सिकाइलाई व्यवहारमा प्रयोग गर्ने क्षमतको विकास गर्ने र आफ्ना सिकाइ अनुभवको उपयोग गरी सङ्गठित ज्ञान हासिल गर्न सहयोग हुने खालका सिकाइ क्रियाकलापमा जोड दिनुपर्छ । यसमा लागि सञ्चालन गरिने सिकाइ सहजीकरण प्रक्रियामा विद्यार्थी सक्रिय भई सिकाइ कार्यमा सरिक हुने र वातावरणीय परिवेशसँग अन्तरक्रिया गरेर सिक्न प्रोत्साहन गर्ने क्रियाकलापलाई प्राथमिकता दिनुपर्दछ ।

विद्यार्थीहरूले कुनै सिकाइ क्रियाकलाप पूरा गरेपछि देखाउन वा अनुभव गर्न सकिने उपलब्धि प्राप्त हुने गरी सिकाइ प्रक्रिया तथा क्रियाकलापहरू सञ्चालन गर्नुपर्दछ ।

सिकारुको सर्वाङ्गीण विकास गर्ने उद्देश्यबाट दुई वा दुईभन्दा बढी अन्तरसम्बन्धित विषयहरूबिच सहसम्बन्ध स्थापित गर्दै सिकारुले हासिल गर्नुपर्ने सिकाइ उपलब्धि एवम् सक्षमतालाई केन्द्रमा राखी एकीकृत सिकाइ क्रियाकलाप सञ्चालन गर्नुपर्छ । सिकाइका क्रममा विद्यार्थीहरूको सिकाइ सक्रियतालाई विशेष ध्यान दिँदै सैद्धान्तिक ज्ञान तथा सिपलाई व्यावहारिक जीवनसँग आबद्ध गर्नुपर्छ । सिकाइलाई बृहत् विषयवस्तुमा केन्द्रित गराउने उद्देश्यले दुई वा दुईभन्दा बढी विषयहरूका सान्दर्भिक पक्षहरूलाई अर्थपूर्ण तरिकाले अन्तरसम्बन्धित गरी एकीकृत पाठ्यक्रम निर्माण गर्ने प्रयास भएकाले विभिन्न विषयक्षेत्रका सिकाइ सक्षमतालाई सरलबाट जटिलतिरको क्रममा सिकारुले स्वगतिमा सिक्न पाउने अवसर सिर्जना गरी सिकाइ व्यवस्थापन गर्नुपर्छ । विशिष्टीकृत विषयक्षेत्रहरूलाई पनि यथासम्भव अन्तरसम्बन्धित हुने गरी सिकारुको पूर्वज्ञान तथा अनुभवसँग समेत सहसम्बन्ध स्थापित गरी सिकाइ प्रक्रिया सञ्चालन गर्नुपर्छ ।

प्रारम्भिक कक्षाहरूमा विद्यार्थीकेन्द्रित शिक्षण सिकाइ क्रियाकलापमा जोड दिई कक्षालाई जीवन्त बनाउन र विद्यार्थीलाई क्रियाशील बनाउन शिक्षकले सहजकर्ताको भूमिका निर्वाह गर्नुपर्ने छ । विद्यार्थीकेन्द्रित सिकाइ क्रियाकलापबाट सिकाइ प्रभावकारी हुने, विषयवस्तुलाई अन्तरसम्बन्धित गर्न सहज हुने, बालबालिकाहरूले व्यवहारकुशल तथा जीवनोपयोगी सिप आर्जन गर्न सक्ने र उनीहरूमा रहेको प्रतिभा प्रष्फुटन सहज हुने भएकाले सिकाइ सहजीकरण क्रियाकलाप सञ्चालन गर्दा विद्यार्थीकेन्द्रित र बालमैत्री शिक्षण विधि अपनाउनुपर्ने छ ।

## १४.१ सिकाइ सहजीकरण प्रक्रियाका लागि केही मार्गदर्शन

कक्षा १-३ सम्मको सिकाइ सहजीकरण प्रक्रिया देहायबमोजिम सञ्चालन गर्नुपर्ने छ :

- बालबालिकाको व्यक्तिगत भिन्नता र क्षमताका आधारमा स्वतन्त्र रूपले सिक्ने मौका प्रदान गर्ने किसिमले कक्षा सञ्चालन गर्नुपर्ने छ । विविधतालाई ध्यानमा राखेर बालबालिकाको सिकाइलाई प्रोत्साहन गर्नुपर्ने छ । खेल, गीत, कविता, कथाकथन, प्रदर्शन, श्रव्यदृश्य सामग्रीको प्रदर्शनमार्फत सिकाइका क्रियाकलापहरू सञ्चालन गरिनुपर्ने छ । यसका अतिरिक्त अवलोकन, समूहकार्य, परियोजना कार्य, छलफल जस्ता विधिहरूका माध्यमबाट बालबालिकाको सर्वाङ्गीण विकासमा जोड दिनुपर्ने छ ।
- सिकाइ सहजीकरण प्रक्रिया सञ्चालन गर्दा विद्यार्थीकेन्द्रित र बालमैत्री शिक्षण विधि अपनाई निरन्तर सिकाइमा जोड दिनुपर्ने छ ।
- विद्यार्थीको सिकाइलाई केन्द्रबिन्दु मानी सिकाइ सहजीकरण क्रियाकलाप सञ्चालन गर्नुपर्ने छ । विद्यार्थीको सहभागितामा योजना निर्माण, परियोजना कार्य, क्षेत्र भ्रमण, समस्या समाधान, खोजमूलक अध्ययन, प्रवर्तनमुखी शिक्षण पद्धतिलाई सिकाइ सहजीकरण विधिका रूपमा कार्यान्वयन गर्नुपर्ने छ ।
- सिकाइ प्रक्रिया सैद्धान्तिक पक्षमा भन्दा बढी गरेर सिक्ने अवसर प्रदान गर्ने क्रियाकलापमा आधारित हुनुपर्ने छ ।
- शिक्षकले सहजकर्ता, उत्प्रेरक, प्रवर्धक र खोजकर्ताका रूपमा भूमिका निर्वाह गर्नुपर्ने छ ।
- पठनपाठनमा सूचना तथा सञ्चार प्रविधिलाई उपलब्ध साधन, स्रोत र आवश्यकताअनुसार उपयोग गर्नुपर्ने छ ।
- सबै प्रकारका सिकाइ आवश्यकता र चाहना भएका (अपाङ्गता, अशक्त, असहाय, कमजोर आदि) विद्यार्थीलाई समेट्ने गरी कक्षामा समावेशी सिकाइ सहजीकरण प्रक्रिया अपनाउनुपर्ने छ ।
- भाषिक कठिनाइका कारण सिकाइमा बाधा नहुने सुनिश्चित गर्न यथासम्भव बालबालिकाको मातृभाषा, घरमा बोल्ने भाषामा सञ्चार गरी सिकाइ क्रियाकलापमा सक्रिय सहभागी हुन सक्ने वातावरण तयार गर्नुपर्ने र्छ ।
- सिकाइ क्रियाकलापमा शिक्षक र सिकारु तथा सिकारु र सिकारु बिचको अन्तरक्रिया, समूह सिकाइ, सिकाइका लागि मूल्याङ्कन, शिक्षक शिक्षक सहकार्य, शिक्षक-समुदाय सहकार्य जस्ता सहकार्यलाई बढावा दिनुपर्ने छ।
- सिकाइ र दैनिक जीवनसँग विषयवस्तुको तालमेल, पूर्वअनुभवमा आधारित ज्ञान तथा सिप विकास, व्यवहारकुशल सिप र सिकाइबिचको सहसम्बन्ध हुने गरी जीवन्त अनुभवसँगको तादात्म्य कायम गर्नुपर्ने छ ।
- बालकेन्द्रित, सिकाइकेन्द्रित, अनुभवकेन्द्रित, उद्देश्यमूलक र विविधतामा आधारित सिकाइ सहजीकरण विधिको प्रयोग (परियोजना कार्य, घटना अध्ययन, खोज अनुसन्धानमा आधारित शिक्षण, सहपाठी सिकाइ आदि) गरी सक्रिय सिकाइ सहजीकरण विधि प्रयोग गर्नुपर्ने छ ।
- सिकाइ सहजीकरण क्रियाकलापमा सिकारुको सिकाइ अनुगमन, विद्यालय तथा परिवारमा सहज सिकाइ वातावरण विकास, पूर्वज्ञानमा आधारित विषयवस्तुको छनोट, समुदाय परिचालन जस्ता कार्यबाट विद्यालय समुदाय सहसम्बन्ध जोड्नुपर्ने छ ।
- सिकारुको रुचि र सिकाइ गति एवम् सिकारुको सक्रिय सहभागितामा सिकाइ क्रियाकलाप चयन र कार्यान्वयन गर्दै स्वस्फूर्त सिकाइमा जोड दिनुपर्छ ।
- शिक्षक, विद्यालय तथा विद्यार्थीलाई सिकाइ सहजीकरण क्रियाकलाप चयन, सञ्चालन र मूल्याङ्कनमा आवश्यक सहयोग, निरन्तर पेसागत छलफल, सहकार्य र अनुभव आदान प्रदान गर्दै शैक्षिक परिवर्तनका लागि सहयोगमा प्राथमिकता दिनुपर्ने छ।
- सिकाइलाई दैनिक जीवन पद्धतिसँग आबद्ध गर्दै व्यवहारकुशल सिप हासिल गर्न सिकाइको खण्डीकरण हुन नदिई एक विषयक्षेत्रको सिकाइले अर्को विषयक्षेत्रको सिकाइलाई सहयोग गर्ने गरी अन्तरसम्बन्धित गरी एकीकृत सिकाइमा जोड दिनुपर्ने छ
- एकीकृत पाठ्यक्रमले सिकाइका लागि सरलबाट जटिलतिरको स्पष्ट मार्ग निर्धारण गर्छ । सरल विषयक्षेत्रबाट क्रमश: जटिल विषयक्षेत्रमा प्रवेश गर्दै जान मार्ग प्रशस्त गर्ने र सिकाइ सहजीकरण पनि विद्यार्थीको सिकाइ गतिबमोजिम गर्न स्वगतिमा हुने सिकाइमा जोड दिनुपर्ने छ ।

विषयक्षेत्रको प्रकृति र स्वरूपका आधारमा शिक्षण विधि तथा प्रविधि तथा कक्षा क्रियाकलापमा विविधता कायम गरिनु आवश्यक छ । शिक्षण सिकाइ प्रक्रियालाई वैज्ञानिक, व्यावहारिक र सिकारुअनुकूल बनाउनका लागि विविध शिक्षण विधि र प्रविधिको उपयोग, स्थानीय साधन र स्रोत तथा उपलब्ध

